# जंगबहादुरको बेलाइतयात्रा



प्रकाशकः—मदन पुरस्कार पुस्तकालय, नेपाल।

बिल नं 1602 ★ श्री पशुपतिनाथ ★

# श्री पशुपति-छापाखाना

( संस्थापक:—मोतिकृष्ण शर्मा, सम्वत् १९५० )

श्री कमलदीक्षित मदनपुरस्कार पुल्चोक

| छपाई विवरण | रुपैयाँ | पैसा |
| --- | --- | --- |
| जङ्गबहादुरको बेलायत यात्रा ४।।। फर्मा के ८५ ३०८ ले | १४२ | ५० |
| ऐ के कभर छपाई के | १८ | |
| ऐ के बाइन्डिङ | २३ | ७५ |
| ऐ के तस्बिर का छपाई के | ७ | ५० |
| | १९१ | ७५ |
| पेस्की आएको— | १०० | |
| बाँकी जम्मा— | ९१ | ७५ |

मिति १८।१।२०१८.

व्यवस्थापक

[signature]

# जंगबहादुरको
# बेलाइत यात्रा



संपादन र भूमिका : कमल दीक्षित



प्रकाशक-मदन पुरस्कार पुस्तकालय,
श्रीदरबार पुलचोक,
नेपाल
२०१४

# भूमिका

नेपाली भाषामा भ्रमण वृत्तान्त लेखिएकै थिएन भन्ने धारणा लाई त चिरञ्जीवी पौड्यालको "आपनु कथा" ले काटिदिसकेको छ। तर समुद्रपारिको बयान पनि हाम्रो भाषामा लेखिएको छ भन्ने हामीलाई थाहा थिएन । ऐले, सय वर्ष अघिको युरोपको वर्णन पढ्न पाउँदा यस विषयमा हामी अरू भारतीय भाषाहरूभन्दा पनि अघि रहेछौं भन्ने लाग्दछ।

प्राइम मिनिष्टर जङ्गबहादुर राजदूतको हैसियतले महाराजाधिराज सुरेन्द्रको खलितापत्र लिएर भिक्टोरिया महारानीलाई भेट्न बेलाइत गएका थिए भन्नेसम्म सबैलाई थाहा छ । यो किताबले जङ्गबहादुरको बेलाइत यात्राको मुख्य उद्देश्य के थियो भन्ने देखाउँछ । उनी बेलाइत जानाको कारण आफ्नै आँखाले हेरी अँग्रेजहरूको बलको पत्ता पाउनु थियो । महत्वाकांक्षी जङ्गबहादुरलाई अँग्रेजहरू घरमा कमजोर देखिए, उनीहरुसँग टक्कर लिई सुगौली-संधि काटेर राज्य बढाउने हौसला थियो होला। बेलाइत गई हेर्दा अँग्रेजहरुको शक्ति र बल ठूलो देखे उनीहरुसँग लड्ने विचार छाडी मित्रता गर्ने उनको लक्ष्य थियो भन्ने बुझिन्छ। लड्ने कुरा जे भए पनि, अँग्रेजहरुको बल पराक्रम बारे उनीहरुले नै भनेका र छापेका कुराले मात्र चित्त नबुझी आफैं गई जाँचबुझ

गर्ने उनको ध्येय थियो भन्ने कुरा यो किताबको पहिल्यै पेजबाट स्पष्ट हुन्छ । लेखेको छ : "आजतक हिन्दूस्थानका मानिस् लन्डन् बेलायत् पुगी आयाको कोहि छैनन्, इन्का मुष जमान् अकवारको वेहोरा सुन्दा सारा हिन्दूस्थान्का राजा नवाव पात्-साहाका मुलुक् लिंदा पनि अँग्रेज्को अवस्थान अँग्रेजका वादसा-हाका वलपराक्रम् तहकित् गरि चिन्हि हिन्दूथान्, मध्येस, पहाड, भोट, चीन कसैले सकेनन् । अव श्रीभगवानको कृपा भया चार धाम पनि गरुला हिन्दूस्थान् वेलायत् ११ तापूका पातसाहाहरुका वेहोरा कार्षाना क्यारहेछ वुझुला । वेहोरा वुझी दोस्ती पनि गरुँला" यस किसिमसँग, पूर्वी देशका शासकहरू कसैले विचार नगरेका दिशा-तिर जङ्गबहादुरले कूटनीतिक पाइलो चालेका रहेछन् भन्ने बुझिन्छ । अन्तर्राष्ट्रीय क्षेत्रमा नेपालको निमित्त यो सानु गौरवको कुरा होइन ।

जङ्गबहादुरको राजकाजी जेहेनकोभन्दा पनि उनको व्यक्ति-त्वको, रहनसहन र चालचलनको बारेमा धेरै कुरा हामीलाई यो किताबले बताउँदछ र साधारण इतिहासका पुस्तकमा पाइनेभन्दा भिन्नै किसिमका तर धेरै महत्वपूर्ण कुराहरू जङ्गबहादुरको विषयमा हामीलाई थाहा हुन्छ ।

बेलाइत जाँदा जहाजमा भएका अँग्रेजहरूले जङ्गबहादुरको बारेमा गरेको कुराको जुन उल्लेख यो किताबमा भएको छ ( पेज ८ ) त्यो र प्यारिसको राजनीतिक क्षेत्र–कौसलमा उनलाई "हाम्रा अघिका वादसाहा" ( नेपालीयन ? ) सँग दाजेर गरिएको

त रिफबाट ( पेज ५४ ) उनको व्यक्तित्व कस्तो रहेछ भन्ने बुझ्न इतिहासकारहरूलाई मदद हुनेछ ।

बेलाइतमा छँदा जङ्गबहादुरले त्यहाँको सामाजिक संसारमा एक किसिमको भैंचालो नै ल्याइदिएका थिए; उनको चालढाल, रहनसहनले उनी बेलाइतवासीका साह्रै प्यारा भएका थिए भन्ने कुरा त अरू इतिहासका पुस्तकबाट पनि देखिन्छ, तर बेलाइत बसुन्जेलका तीन महिनासम्म जुन स्वागत जङ्गबहादुरले पाए त्यसको निरालः वर्णन यस किताबमा छ । यो किताबबाट अरू कुराभन्दा पनि बेलायातका आइमाईहरुको समाजमा त जङ्गबहादुर कामदेवनै ठहरिएका रहेछन् भने जस्तो बुझिन्छ । स्वास्नी मानिसहरू उनीमाथि त्यसै आसक्त हुन्थे ( पेज ३७ ) जङ्गबहादुर उनीहरूप्रति कत्तिको आकर्षित भएका थिए त्यो यो किताबबाट खुल्दैन । तर "बरू नआयाको भया हुन्थ्यो, अब जान्छौ भन्दा हामीलाई मुटुमा तीर हानेको जस्तो लाग्छ" ( पेज ३७ ) भन्ने मायालु रमणीप्रति उचित भाव व्यक्त गर्न शिष्टाचार जान्ने जङ्गबहादुर अवश्यै चुकेन होलान् । यता, यसरी आसक्त हुनेहरुमा ठूलै ओहदाका आइमाई थिएकि भन्ने शङ्का लाग्दछ । किनभने, तल्ला खालका स्वास्नीमानिसले उनीसँग त्यसरी बोल्ने साहस गरेकै भएपनि त्यस कुरालाई यति महत्व दिएर अवश्य वर्णन गरिदैन थियोहोला ।

यस किताबको महत्व खालि जङ्गबहादुरको व्यक्तित्वको बारेमा मात्र छैन । बेलाइत-बृटेनको पार्लियामेण्टको जो वर्णन यहाँ गरिएको छ, त्यसबाट बेलाइत गएको यो प्रतिनिधिमण्डल

(जसमा जङ्गबहादुर पनि शामेल छन्, निश्चय ) कतिको प्रभावित भएको थियो भन्ने बुझ्न सकिन्छ । हुकुमी शासनको एकोहोरो राजकाज मात्र देखेका नेपालीहरुले त्यहाँको संसदीय प्रणाली देख्दा एकदम अवाक् भएका रहेछन् भन्ने यसको अक्षर-अक्षरमा देखिन्छ । जस्तो कि राजाको शक्ति सीमित भएको कुरामा आश्चर्य मानेर लेखेको छः "आफ्ना दर्बारको दौलथ, म राजा हूँ, मेरै धन हो भनी बादसाहा पनि आफुखुशी गर्न पाउँदेनन्" ( पेज ७३ ) राजाका शक्ति छाँटएको त नेपालीहरुले त्यसै बखत देखिसकेका थिए, त्यसमा ठूलो कुरो केही भएन; तर प्राइम मिनिष्टर त सर्वेसर्वा हुनुपर्ने, सो पनि छैन भन्ने कुरा दर्शाउँद लेखेको छः "मेरो दर्जा ठुलो छ भनि प्राइम मिनिष्टले अनरीत् गऱ्या पारमेण्ट कौसलबाट सजाय हुन्छ" ( पेज २५ ) प्राइम मिनिष्टरको अधिनायकवादमा चलेका नेपालीहरुलाई त यस कुराले आँखै खोलिदिएको थियो होला । जङ्गबहादुरले पनि यो हृदयंगम गरेको हुनुपर्छ । किनभने त्यसपछि नेपाल फर्केर आएपछिको जङ्गबहादुरको शासन प्रणाली केही मात्रामा कम आतंकवादी भएको थियो भन्ने इतिहासकारहरुले मानेको कुरा हो । त्यो यही सबै कुराका प्रभाव परी भएको हुनुपर्छ ।

पार्लियामेण्टबाट यिनीहरू कत्तिको प्रभावित भएका थिए भन्ने कुरालाई यो किताबमा पार्लियामेण्टको कति लामो वर्णन गरिएकोछ त्यसैबाट पनि अनुमान गर्न सकिन्छ । यो कितावमा त्यति विस्तारसाथ अरू कुनै कुराको पनि बयान गरिएको छैन । तर, पार्लियामेण्टको तारीफ गर्दा, एक दुइ कुरा विशेष नबुझिकन लेखेको जस्तो लाग्छ । पैलो कुरा त के भने बेलाइतको पार्लिया-

मेण्टको कारवाई बाइबल बमोजिम चलेको छ भन्ने गलत धारणा यो किताब लेख्नेलाई परेको रहेछ "किताब" मा यस्तो लेखेकोछ, उस्तो लेखेकोछ भनेर ठाउँ-ठाउँमा भनेको छ । बेलाइतको त कुनै लिखित संविधान छैन, त्यसो हुँदा त्या "किताब" भनेको के होला जस्तो लाग्छ । तर त्यसै सिलसिलामा एक ठाउँमा "जिज्युक्यस" या जोजस क्राइष्ट (पेज २७) को नाम परेकोले दुइ कुरा मिलाएर हेर्दा "किताब" भनेको बाइबललाई नै होकि भन्ने अड्कल काटिन्छ । त्यसो भएमा उता, पेज ३४ मा भएको भविष्यवाणी कुन चाहिं किताबको होला खुल्दैन । फेरि अर्को एक ठाउँमा पार्लियामेण्टलाई "अैन" भन्ने संज्ञा दिइएको छ । यसरी: "यो पार्लमीण्ट कचहरी कस्तो हो भन्या धर्मसास्त्र, नीतिसास्त्र, वृद्धाको चलनको सार झिकी बनायाको अैन हो" (पेज २९) । हुन न यो कलमको भूल मात्र हो जस्तो देखिन्छ । किनकि एउटा संस्थालाई कसैले जानी जानी ऐन या किताब कसरी बनाउला ।

पार्लियामेण्टको बारेको यस्तै एक दुइ गलत धारणा बाहेक, अरू कुरामा त यो किताब लेख्ने मानिसको लेखाइमा सूक्ष्म निरीक्षणका अनेक नमूना पाइन्छन् । जस्तो फ्रान्स पुगेपछिको एउटा वाक्य छ "पृथ्वीका पीठमा कालिगढ अकलवन्द फ्रान्सीसको बराबर कौनै मुलुकमा छैनन्" (पेज ४६) । सय वर्ष अघि वैज्ञानिक र कलात्मक विषयमा सबैमा चढे बढेको मुलुक फ्रान्स नै थियो, हो, तर एक फेरा नजर घुमाउँदैमा भन्न सकिने कुरा यो होइन—सूक्ष्म दृष्टि चाहिन्छ । जस्तो लङ्का टापूको बयान गर्दा त्यहाँको इतिहासको आफूले बुझेसम्मको कुरा संक्षिप्त रूपमा पेश

गरिएको छ । त्यस्तै जहाज बनाउने ठाउँ (।पंगला ? ) को बयान गर्दा एउटा ठूलो जहाज बनाउन लाग्ने समय र ज्यामीको हिसाब इत्यादिको पनि उल्लेख भएको छ । अरुमा, लण्डन सहरको वर्णन, बेलाइत र फ्रान्सका विभिन्न क्यासलहरुको बयान, निम्ताका पार्टीको वर्णन इत्यादिमा चाख लाग्दा उल्लेख छन् । त्यो सबैलाई यो किताबका लेखक वरपरका कुरामा पनि निकै चाख राख्दा रहेछन् भन्ने देखिन्छ ।

यी लेखक रसिक पनि रहेछन् । आइमाईको बयान गर्नु पर्दा सबै ठाउँमा यिनीले मन फुकाएर गरेका छन् । मेडिटरेनियन सुन्दरी—माल्टाका रमणीहरू देखेदेखि यिनले गोरा छाला भएका बीमहरू देख्नथाले । त्यसपछि, यिनी उनीहरुको चन्द्रबिम्ब जस्तो मुख, कमलपत्र जस्ता आँखा र तेलका धारा जस्तो (लाम्चीलो ?) नाकको बयान गर्दा कैले अघाउँदैनन् । बेलाइत पुगेपछि त झन् "जो देख्यो राम्रो, ज्या देख्यो राम्रै" हुँदा इन्द्रासन या स्वर्ग नै यही हो कि जस्तो लागेको कुरा अति रसीलोसँग बयान गरेका छन् । सुन्दरीहरुको यस्तो वर्णनबाट यो किताबका लेखकलाई संस्कृत साहित्यको ज्ञान रहेछ भन्ने लाग्दछ । यिनले जङ्गबहादुरका/ तीन भाइ अँग्रेजका सभामा जाँदा जरासन्धका सभामा कृष्ण अर्जुन भीमसेन गए जस्तै देखियो पनि भनेका छन् ( पेज २२ ) । त्यसबाट र बीच–बीचमा यिनले दिएका पुराणका अरू उपमाहरु बाट यिनको संस्कृततर्फ राम्रो दखल रहेछ भन्ने कुराको पुष्टि हुन्छ ।

त्यो बाहेक, यी लेखक वकालती पनि गर्न जान्ने चलाख रहेछन् भन्ने कुरा यिनको लेखाइको एक ठाउँबाट झल्कन्छ। सारै मामूली ढङ्गबाट निकै महत्वपूर्ण कुराको उल्लेख गरी त्यो कुरा भनेको हो कि होइन जस्तो परिदिनु सारै ठूलो पारखीको काम हो। त्यो यिनले गरेकाछन्। बेलाइत गएका प्रतिनिधिमण्डलले आइमाईको विषयमा आफूलाई अलि छाडा छाडेका थिए भन्न खोजेर, अनि त्यस कुरामा उनीहरुको विशेष दोष पनि थिएन भन्ने कुरालाई उनले एउटा मात्र वाक्य लेखेर सिध्याएका छन्। बेलाइतका ठूला घरानाका आइमाईहरुको वर्णन गरेपछि उनले लेखेका छन् "तीनका रूप देषी र जोभन, भारी गहना-पोसाक, तिनका सफाइ, मुषको श्री, देषदा दसै इद्रिय जिती रहन्या सुकदेव स्वामीलाई पनि मोह गराउन्या, अति सुरी, अति चंचली, तीन्का रूपको वर्णन गर्न सकीदैन" ( पेज २१ )। दश इन्द्रिय जित्ने शुकदेवजी त यस्तो ठाउँमा पुगेका भए आइमाईमा लट्ठ हुन्थे भने बेलाइत पुगेका प्रतिनिधि-मण्डलका अर्धाहरुलाई के भन्न भन्न खोजेको जस्तै छ, लेखकले ! त्यसमा अझ तरुनी मीमहरुसँग जङ्गबहादुरले भेटेको कुराको सिलसिलामा लेखिएको हुँदा यो वाक्य अरू अर्थपूर्ण लाग्दछ।

यो किताब पढ्दा मनमा उठ्ने भावहरुमा सबभन्दा टडकारा एउटा छ, त्यो के भने यसमा वर्णन गरिएका सबै कुरा नेपाली आँखा हेरर नेपाली ( सय वर्ष अघिको नेपाली समाज ) को निमित्त बयान गरिएका छन्। नेपालमा नभएका, नदेखेका चीज-बीज देख्दा साँच्चै नै अचम्म लागेको कुरा नलुकाई स्पष्ट लेखेको

छ। नेपालीहरूले कहिल्यै नदेखेको चीज, रेल, देख्दा त्यसको करामत देख्दा जुन भाव त्यहाँ गएका नेपालीहरूको मनमा एकदम निस्क्यो त्यसलाई त्यही रूपमा कागजमा उतारेको छ: "४० कोस बाटो रेलगाडामा चढी जाँदा ५ घडीमा पुग्याछन्" ( पेज १४ )। ठूला-ठूला फ्याक्टरी, मिल, मेसिनरी नदेखेका नेपालीहरूले फ्याक्टरीहरूमा राम्ररी काम भएको देख्दा भने होलान् : "कलले काम गर्दा राम्रो पनि, बलियो पनि, चाँडो पनि हुँदो रहेछ", त्यही कुरा केही तल माथि नपारी यहाँ लेखिएको छ ( पेज ३८ )। यो सबै भन्नाको मतलब के हो भने—यो किताब लेख्ने मानिसको वर्णनको सत्यता र इमान्दारी तारीफ लायकको छ।

नपालीहरूको लागि लेखिएको यो किताब ( यो किन छापिइहालेन, विचार गर्न कुरा छ ) मा बुझ्दै नबुझिने अँग्रेजी फारसी नाम दिएर चीजबीजको बयान गरिएको भए उति काम लाग्ने थिएन। यो कुरा लेखकले राम्ररी बुझेका थिए। कोइला नबुझ्ने नेपालीले "पत्थरको गोल" र त्यस्तै "टाइल" नबुझ्नेले "पत्थरको झिङ्गटी" अवश्य बुझ्दथ्यो। लण्डनको कर्पोरेसनको तारीफ र सरसफाइको बेली विस्तार गरेर त्यो बेलाका नेपाली जनतालाई विशेष चाख लाग्ने थिएन होला, तर गल्ली र नालले बेरिएको काठमाडौं खाल्डाका नागरिकले लण्डन सहरमा "नाल देख्नु कहीं छैन। हिलो धुलो नर्क कसिङ्गर देख्नु कहीं छैन" ( पेज १६ ) भनेको सुन्दा पक्कै प्रभावित हुँदा हुन्। फेरि, बेलाइतमा विज्ञानको खूब प्रगति भएकोछ, सबै काम विज्ञानको मददबाट हुन्छ भन्नुको साटो,—कमारा कमारीको चलन भएको नेपालमा

—"आगो पानी बतास अँग्रेजले कमारो तुल्याएको छ" (पेज१७) भन्नु बढ्ता अर्थपूर्ण हुन्छ । त्यस्तै पार्लियामेण्टलाई "कौसल" "कचहरी" भनी बयान गर्दा नेपालीले केही न केही जरुर बुझ्थे होलान् । बेलाइतको राजकाजमा रैती दुनियाँलाई पीर पिराउ केही हुँदैन; त्यहाँ "कोतपर्व" सधैं मच्चिन्दैन भनेर लामो व्याख्या गर्नाको साटो रामराज्यको सपना देख्ने नेपालीहरुलाई "रामराज्य तेही मुलुकमा रहेछ" ( पेज १९ ) भनेर गागरमा सागर अटाइदिने लेखकको कलमको जति तारिफ गरे पनि हुन्छ।

नेपाली आँखाले हेर्दा हेर्दै एक दुइ ठाउँमा भने लेखकले अँग्रेजी रिवाजै नबभी भद्दा भूल गरेका देखिन्छ । पर-पुरुषसँग बोल्नै नहुने नेपाली जनानाको बानी परेका लेखकलाई मीमहरुले आई आफूहरुसँग बोलेको, हाँसेको, मीठा-मीठा कुरा गरेको देख्दा हो न हो यिनीहरू आफूहरू माथि आसक्त परेछन् भनी ठाने झैं लाग्छ । पेज २१ मा बखान भएको निम्ताहरुको बयानमा यस्तै भूल परेको जस्तो देखिन्छ । लेखेको छ : "भारी गहना-पोसाक लायाका भारादारका स्वास्नी, छोरी, बुहारी सबै आउँछन्, श्री मिनिष्टर साहेबलाई हात समाति गुडमानी सलाम गर्छन् । सारा आंग सिर झुकाइ बोल्छन् । लोग्न्याहरू बरपर लागि बस्थ्या; स्वास्नीहरू अघिसरी बयर मिजास पुछन्या, गहना कपडा हेरी बडो षातिर गरि बोल्न्या । लाट डुक साहेबानहरू पनि आफ्ना छोरी बुहारी राम्रा-राम्रा तरुणी-तरुणा अघि राषि इन लाई तपाइले प्रसन्द गर्‍यौ कि गरेनौ भनि श्री मिनिष्टर साहेबलाई सोध्न्या । दाहिन्या बाउँ अघि पछि राषि दिन्या" । यो लेखाइबाट

त अँग्रेजहरुले आफ्ना छोरी बुहारीहरू जागी--जानी जङ्गबहादुर-लाई नजर चढाउन ल्याएको जस्तो देखिन्छ, जुन कुरा यथार्थ होईन । त्यसबाट यस विषयमा लेखकले अंग्रेजी रिवाज नबुझेको स्पष्ट थाहा हुन्छ । तर माथि भनि सकिएको छ---लेखकले हरेक कुरा नेपाली आंखाले हेरेर नेपाली मनले बुझेर नै लेखे । उनको दोष छैन, सय वर्ष अघिको नेपाली समाजमा हुर्केको जो सुकैले अंग्रेजहरूको त्यो रिवाज देख्दा झट्ट त्यस्तै ठान्दा हुन् । त्यसैले, कुराको प्रामाणिकतामाभन्दा आफूले जे देख्यो, आफूलाई जस्तो लाग्यो त्यही कागजमा उतारी दिने यी लेखकको इमान्दारीतर्फ हामीले बढ्ता ध्यान दिनुपर्छ । त्यो इमान्दारी तारीफ लायकको छ ।

अफसोसका कुरा छन्--यस्ता लेखकको नाम हामीलाई थाहा छैन । यो यात्राको बयान लेख्ने को हो त्यो लेखिएको छैन । अड्कल मात्र काट्न सकिन्छ । त्यो के भने यो लेख्ने मानिस निश्चय पनि सवारीसाथ बेलाइत भएको व्यक्ति हो । बेलाइत गएकामध्ये पनि अँग्रेजी पढेका ( पहिला नेपाली ? ) लेफ्टेन ललिसिंह खत्री र जङ्गबहादुरका विशेष विश्वासपात्र भएका ( "भक्त भानुभक्त" नाटकमा आउने ) सुब्बा सिद्धिमान राज-भण्डारी, यी दुइ जनामा बेसी अनुमान लगाउन सकिन्छ । त्यसमा पनि झन् सुब्बा सिद्धिमानमाथि नै बढ्ता शङ्का गर्ने ठाउँ छन् । त्यसका दुइ कारण छन् । एक त लेख्ने गर्ने काममा निजामती तर्फका सिद्धिमानलाई नै लगाइनु बढ्ता संभाव्य कुरा हो र महाराजले आडर नदिईकन त्यस जमानामा कसैले आफुखुसी

महाराजको सवारीको वर्णन लेख्न कलम समायो होला भन्न मिल्दैन । दोस्रो कुरा, अँग्रेजी पढेनालेभन्दा संस्कृत पढेकाले नै "कमलपत्र जस्ता आँखा" इत्यादि भनी आइमाईको तारीफ गर्न सक्छन् । फेरि अँग्रेजी पढेकाले घण्टा र मिनेट नभनी प्रहर र घडी भन्दैनथे होलान् । त्यस बाहेक, कुनै पनि अँग्रेजी पढेको मानिसले लण्डनबाट ५०० कोस पश्चिमको स्कटल्यांडको उल्लेख गरी ( पेज ३८ ) अथवा लण्डनबाट प्यारिसलाई २०० कोस ( ४०० माइल ) छ भनी आफ्नो भूगोलको अज्ञान ( पेज ४४ ) देखाउँदैन थियोहोला ।

लेखक जो भएपनि यो पुस्तक लेखकको आफ्नै हस्ताक्षरमा हाम्रो सामु आएको छैन । यो किताप मूलकापीबाट कसैले सारेको हो भन्ने स्पष्ट छ । पेज १८ मा र ५० मा अक्षरसः दोहरिएका पंक्तिहरू नै यसलाई प्रमाण हुन् । यो सार्ने काम लेखक आफैंले गरेहोलान् भन्न गाह्रो छ । किनभने यसमा "ट" र "त" को अशुद्धि बाहेक अरू धेरै लफ्जहरू पनि सार्नेको गलतीले गर्दा नबुझिने भएका छन् । लेखकले नै प्रतिलिपि बनाएकोमा यस्ता नराम्रा भूलहरू अवश्य रहने थिएन होलान् ।

सार्ने काम जो सुकैले गरेको भएतापनि यसको मूलकापी कतै रहेकै हुनुपर्दछ । त्यसको पत्ता लागेमा शायद लेखकको नामको पनि यकीन साथ थाहा हुन्थ्यो । हाल पाइएको यो प्रतिलिपि चाहिं श्री रुद्र विक्रम राणाका घरबाट प्राप्त भएको हो र यो पुरानो किसिमको तर रूल भएको एक्सरसाइज बुकमा पेजको दुवैपट्टि गरी लेखिएको छ । माथिदेखि तलसम्मका जम्मा ५७ पेजमा प्याराग्राफ कतै छुट्याइएको छैन, कतै-कतै चार भर्ना

दिएर विषय छुटयाइएका छन् । विराम चिन्ह कतै पनि छैनन् तर कहीं-कहीं अनावश्यक ठाउँमा दुइ तीन लवजसम्म थोप्लो दिइएको छ । पदयोग र पदविच्छेदको केही ठेगान छैन त्यस्तै ह्रस्व दीर्घ र अरू शब्द रचनामा पनि कुनै एकनासेपन छैन । अक्षर सबै एउटैको जस्ता छैनन् तर लेखाई पाको मसीमा बाँसको टाँकाको जस्तो देखिन्छ ।

यी त भए सरसरी हेर्दा देखा पर्ने मामूली कुरा । यो कितबको महत्व त किताब समग्र नपढी बुझिंदैन । गहिरिएर पढ्नेले यसमा धेरै कुरा भेट्टाउनेछन् । इतिहासकारलाई जङ्गबहादुरको विषयमा परेका धेरै भ्रमहरू हटाउन यसले मदद दिनेछ, त्यो निःसन्देह भन्न सकिन्छ । अरू कुराभन्दा पनि, जङ्गबहादुरको बेलाइत यात्राले अन्तर्राष्ट्रीय क्षेत्रमा मानिसलाई पहिलो बाजी नेपालको अस्तित्व मान्न कर लगायो भन्ने मान्नु पर्नेछ । नेपाल ( जोकि त्यो बेला "गोर्खा राज्य" भनिन्थ्यो ) भन्ने एउटा ठूलो शक्ति रहेछ भन्ने अँग्रेज जनतालाई पनि पऱ्यो । यस कुराको पुष्टि जङ्गबहादुर बेलाइत पुगेपछि वहाँका प्राइम मिनिष्टरले उनलाई भेट्न आउँदा भनेका कुराबाट र उनको बिदाइको बखत महारानी भिक्टोरियाले भनेका कुरा ( पेज ४२ ) बाट हुन्छ । लेखेको छ : "तपाई याहा आउनाले बढिया भयो । क्या अर्थले भन्या हिन्दुस-थानबाट तपाई जस्ता ठूला मानिस याँहाँ कोही आयाको छैनन् । तपाईंको रवाफ देषदा यहाँका छोडा बडा सबैलाइ गोर्षा भन्याको ठूलो रह्याछ भन्या धाक् पनि भयो ।" ( पेज २०-२१ ) । नेपाली मात्रले नाक फुलाउने कुरा हो यो, जसको श्रेय जङ्गबहादुरलाई नै छ ।

इतिहासका विद्यार्थीलाईभन्दा बाहेक भाषाशास्त्रपट्टि चाख लिनेलाई पनि यो किताबको अध्ययन लाभप्रद हुनेछ। धेरै कामका कुरा फेला पर्नेछन्। सम्बत् १९१० साल तिरको नेपाली गद्यको रूप हेर्न खोज्नेलाई त प्रतिनिधि ग्रन्थ नै यही हुनेछ। १० सालतिर नै नेपाली गद्य यति विकसित भैसकेको थियो भन्ने कुरा यो किताबबाट जान्न पाउँदा सबैलाई आश्चर्य र आनन्द लाग्नेछ। गद्यमा साहित्य भर्न सक्ने खूबी पनि त्यो बेलामा नेपालीमा रहेछ। अझ, ठेठ नेपालीपनको साहित्यको समेत सिर्जना गर्न हाम्रा साहित्यिकहरूले त्यही बेलादेखि थालिसकेका रहेछन्। त्यस किसिमको झर्रो नेपाली प्रयोगको एउटा नमूना हो "तेलको धारा झैं नाक"। व्याख्या व्यर्थ छ। त्यस्तो अर्को प्रयोग छ "आगो पानी बतास अँग्रेजले कमारो तुल्याएको छ"। सय वर्षअघि लेखिएको यो एउटा त्यस्तो वाक्य हो जुन लेख्न सक्दा आजभोलिका लेखकले पनि घमण्ड गरे हुन्छ। यो वाक्यमा अर्थको एउटा संसार लुकेको छ। गद्य लेख्नमा पोख्त भएका साहित्यिक कलम नभै यी जस्ता अनमोल रत्नहरू निस्कने थिएनन्, त्यो ठोकुवा गरेर भन्न सकिन्छ।

यस किसिमको अनमोल किताब पनि आजसम्म नेपालीहरूले पढ्न पाएका थिएनन्। त्यो दुःखको कुरा हो। तर यतिका वर्षसम्म लुकेर बसी ऐले झुल्केको यो रत्नको झुल्क्याइ निरर्थक होवैन--पारखीहरुको नजर पऱ्यो भने !

—कमल दीक्षित।

श्री दरबार, पुलचोक।
२०१४-११-२६-१ मा

## छपाइ बारेमा

यो किताबको कुनै नाम थिएन। त्यसैले यसलाई एउटा नाम दिइयो—"जङ्गबहादुरको बेलाइत यात्रा"। "बेलाइत" को अर्थ यहाँ इङ्गल्याण्ड मात्र होइन, ( जस्तो कि अचेल छ )। जङ्गबहादुरको समयमा, शायद जे अर्थ थियो यो शब्दको त्यही अर्थमा यो यहाँ लिइएको छ। त्यो बेला यसको के अर्थ थियो भन्नलाई यो शब्दको व्युत्पत्ति खोज्नुपर्छ। 'बिलायत" भन्ने अरबी लब्ज हो। उर्दू मा आउँदा यसको माने "विदेश" हुन्छ। उर्दू को लुगत (कोश) मा "विलायती" को यति अर्थ दिइएको छः– विदेशी, युरोपियन, इङ्गलिस पर्सियन, टर्किस या चाइनिज। यसबाट नेपालीमा पनि त्यस ताका यी सब अर्थमा "बिलायत" को प्रयोग हुन्थ्यो होला भन्न नसके पनि यति त सजीलै संग भन्न सकिन्छ कि समुद्रपारिका मुलुकहरूलाई बेलाइत भन्ने रिवाज त्यो बेला हुनुपर्छ। यस किताबमा ११ टापु बेलाइत र १२ टोपी बेलाइत भनेर छुट्याएकोबाट पनि यो कुराको पुष्टि हुन्छ।

यस किताबलाई मुद्रित गर्दा गुरुकापी जस्तो हुबहु नगरी वाक्य, प्याराग्राफहरू छुट्याई विषयवस्तु अलग्ग छुट्टिने गरी शीर्षक र उपशीर्षक दिई पढ्न सजिलो बनाउन खोजिएको छ। विरामचिन्हको नामै नभएको लेखोट पढ्न पाठकहरूलाई निकै असुविधा होला भनेर विरामचिन्हहरू हाल्ने साहस गरिएको छ। तर इतिहासकार र भाषाशास्त्रीहरुको सुविधाको खयालले विराम

चिन्ह इत्यादिको थपथाप वाहेक भाषाको रूपमा जस्ताको–तस्तै उतार्ने कोशिश गरिएको छ । पद–न्यास र पद–विन्यास बाहेक यसमाका अरू ह्रस्व, दीर्घ, ट र त इत्यादिको कुनै शुद्धि गरिएको छैन । शब्दका रूपमा रेफ छुटेका र शिरविन्दु छुटेका स्पष्ट थाहा हुने ठाउँका रेफ शिरविन्दु इत्यादि थपिदिइएकोछ । त्यस्तै सानोको गफलतले मात्र भएका जस्ता भूलहरू, जस्तो कि, "मुनिन्छ" का सट्टा भएको "सुनिन्द", "बाहाड" को सट्टा भएको "बाहाड" इत्यादिलाई सच्याइदिइएको छ । अरू, नेपाली उच्चारणले बयान गरिएका अंग्रेजी नामहरू कतै नोटेशनमा खुलाइएकोछ (उदाहरण: जिब्रपार––जिब्राल्टर; प्रिन् सालबट––प्रिन्स अलबर्ट इ०) र कतै जस्ताको तस्तै छाडिदिइएको छ (उदाहरण: रिचमण्ड टेरेसको रिजवन्त क्यारेज घर; फलेव्लो को फाटन पुल ई० ) ।

जे जति गरिएको छ साधारण पाठकलाई पढ्दा सजीलो होवस् भनेर नै गरिएको छ । भाषाको इतिहासको खोजी गर्न चाहनेहरूको लागि त मूलकापी न प्रकाशकसंग सुरक्षित रहेको हुँदा केही अपठेरो पर्दैन होला जस्तो लाग्दछ ।

—सम्पादक ।

# धन्यवाद्

श्री बालकृष्ण समज्यूलाई यस किताबमा परेको जङ्गबहादुरको तसवीर यसमा राख्न अनुमति दिनु भएको मा,

कुमारी ज्वाला समज्यूलाई उहाँले सो तस्वीरको यति राम्रो प्रतिलिपि उतारिदिनु भएको मा,

पशुपति-प्रेस-परिवारलाई यो किताबमा राम्ररी चाख लिई काम गरिदिएको मा, र

श्री श्याम प्रसाद लामिछानेज्यूलाई प्रुफ सम्बन्धी सबै भार बोकिदिनु भएको मा

मुरी मुरी धन्यवाद ! ! !

—प्रकाशक ।

# जंगबहादुरको बेलाइत यात्रा




"...गोर्षा मन्याको ठुलो रह्याछ......" ( पेज २०–२१ )

# प्रस्थान

## *यात्राको उद्देश्य*

स्वस्तिश्री मद्राजकुमार कुमारात्मज श्री प्राइम्मोनिष्टर याण्ड कम्यांडर इन चिफ जनरल जङ्गवहादुर कु.वर राणाजीवाट सम्वत् १९०६ सालमा तर्जविज गर्नु भयाको अंग्रेज पात्साहाको र हाम्रो सीवाना जोरियाको छ। इन्को फौज, पल्टन्,षजाना, हात्हतियार, मुलुक, दौलथ, आम्दानि षर्च, थिति बन्दोबस्त क्या रहेछ पात्साहि तषत् वेलायेत् काहा रहेछ, लन्डन् सहर कस्तो रहेछ, ताहाका भारादार दूनिआ गैह्रको मीजाज कस्तो रहेछ, आजतक् हिन्दूस्थान्का मानिस् लन्डन् वेलायेत् पुगी आयाको कोहि छैनन्, इन्का मुघ जमान् अकवारको वेहोरा सुन्दा सारा हिन्दूस्थान्का राजा नवाव पात्साहाका मुलुक् लीदा पनि अंग्रेज्का अवस्थान अंग्रेजका वादसाहका वल पराक्रम् तहकीत गरि चिन्ह हिन्दूस्थान्, मध्येस, पाहाड भोट्,चीन, कसैले सकेनन्। अव श्रीभगवान्को कृपा भया चार धाम पनि गरूंला हिन्दूस्थान् वेलायेत् ११ तापुका पातसाहाहरूका वेहोरा कार्षाना क्या रहेछ वुझुंला। वेहोरा वुझि दोस्त पनि गरूंला भन्या मनसुवा पनि गर्नु भयो र आफ्ना माहिला भाइ श्रीमद्राजकुमार कुमारात्मज श्री कम्यांडर इन चीफ जनरल बंवहादूर कु.वर राणाजिलाई मुल्कि कार्षाना, जंगि फौज पल्टनको भारा अषतीयार गरिदिया। आफ्ना साथमा भाई श्रीमद्राजकुमार कुमारात्मज श्री कर्णेल जगत सम्सेर जङ्ग कु.वर रानाजी, श्री धीर सम्सेर जङ्ग कु.वर राणाजी ३ दुइ जना र वडा कपतान् रणमेहेर अधिकारी

काजी करविर षत्री, काजि हेमदल थापा, काजि डील्लीसिं वस्न्यात् लेफटेन् लालसिं षत्री, लेफ्टेन करविर षत्री, लेफटेन् भिमसिं राना, सुव्वा सिधिमान् राजभंडारि, सुव्वा सिवनरसिं, षरिदार पृथ्वीधर पाध्या र—औ हुदा सिपाहि केटा स्मेत् जमा जना २५ आदमी जीलीफमा ली मुलुक सयर गर्नालाई श्रीमद्राजकुमार कुमारात्मज श्री प्राइम मीनिष्टर याण्ड कम्यांडर इन चिफ जनरल जङ्ग वहादूर कुंवर राणाजिवाट् सम्वत् १९०६ साल माघ मैन्हाका तारिष ४ का दिन चिसापानि कील्लाको वाटो गरि सवारि भै रवाना भै वक्सनु भयो। सिकार षेलदै पथरघटाका जंगलमा पुगि ४ हाति पक्रनुभयो। २।४ वाघ र हरिन्हरू धेरै मार्नु भयो। ताहादेखि कडरवना गढि छाउनिमा प्राउला गर्नु भयो र ताहाका रैतीहरू आई सामेल भया। सर्वहरूलाई षातिर गर्नु भयो। केहि रकम् कलम् पनि छोडी रैयत राजि राषी ताहावाट रवाना भै आफ्ना मुलुक छोडी अंग्रेजका मुलुकमा ढाका भन्याको गाउमा फौज पलटन् स्मेत् ली छाउनि डेरा गरिवक्सनु भयो।

## पटना र कलकत्ता

तेस्तै रीतले ७ दीनमा पटना सहर कील्ला कमरेमा श्री माहीला साहेवका हवेलीमा वास डेरा पऱ्यो। ताहावाट दानापुर गोला घर उत्तर तर्फका कोठीमा डेरा पऱ्यो। ताहाका अंग्रेज वडा साहेवहरू आई वडा षातीर गऱ्या। फौज पल्टन् षडा गरि १९ तोपको सलामी गऱ्या। सबै वनिआ मुल्कीसाहेवान्हरूले षुसी भै मीजात् गऱ्या। अव हजुर विलायत जान पाउ लाग्नुभयो, अव दुइ सर्कारको यक चित्त दोस्त रहला भनि पल्टन् दुनीआदार सुष भोग गर्नन् सवै कुराको वढिया होला भनि वडा षुसि भै षातिर गऱ्या। अव

वाटालाई चाहीन्या मदत् जो चाहींछ फर्माउनुभया हामी ताकीत गर्छौं भनी बीन्ती गऱ्या। सवारिलाई धुवाबसको जाहाज र रसद चाहीन्या सराजाम् तयार गरि १ कप्तान पाउ रष वारिमा षटाई दी रवाना गरिदिया। अग्निवोटमा सवारि भै सुन्दरवनको वाटो गरि कलकत्ता तर्फ पाउ लाग्नुभया।

११ दिनमा कलकत्ता सहरका धानपाल घाट्मा उत्रनुभयो। तेस वषत्मा कस्तो भयो भंन्या कलकत्ता सहरका फौज पल्टन्को परेट् षडा थीयो। वादसाहि वाजा वजाउन लाग्याका थिय र तोपका वढाइ हुन लाग्याको थियो। अंग्रेजिका मुल्की साहेवान्, मीम साहेव, लेदि साहेवहरू वगिका सवारी भै आयाका थिया। सहर-वासी छोटा, वडा विलकुल सामेल थिया। सवा लाष आदमिको भीड थीयो। तेसै वषत्मा वडा साहेवहरू आई टोप उतारि षातिर गऱ्या। वडा षुसिनामा भयो। अव लंडन् वेलायेत पाउ लाग्नुभया पछि दुवै सर्कारको वढिया भयो। पछि परन्तुसम्म यक चित्त रहन जाला, दोस्तमा षलवल हुनैन। २ तर्फका भारादार, फौज, पल्टन्, महाजन, दुनीदार सवै राजी रहनन्। आजसम्म हिन्दुस्थान-का पातसाहा, नवाव, राजा, भारादार कसैले वेलायेतको मनसुवा गऱ्याका थीयन। आज हजुर वडा प्रतापी अकलमन्द हुनाले वेला-येत जानाको मनसुवा राषनु भयो। वडो फाइदा हुन्याछ। क्या अर्थले भन्या, जस्तै महतारिका गर्भमा दस मास रहदा केहि देषि-न्दैन, जन्म भयापछि नजर षुल्दा पृथ्वी, आकास, चन्द्र, सुर्यको धर्म नपाउदा त्यो वालषलाई वडो आसर्य्य हुन्छ, तस्तै गरि पाउ लाग्नु हुदा वाटामा समुद्रको वाहाड हुन्छ, नाना तह्रको जानवर देषींछन्। समुद्रको स्वभाव वुझ्दा आफुलाई ढेरै अकल वढ्छ। वीचमा ५।६ पातसाहाको मुलुक देषींछन्।

वेलायत पुग्यापछि बाह्र तोपी वेलायतका रजीडन्ड, भारादार, महाजन् बस्याका छन् । तीनहरूसित भेट मुलाकात हुदा त्यो मुलुक देषदा ढेर फाइदा हुन्याछ । अब उप्रान्त हजुरलाई जो चाहींछ सो माफिक फर्माउनु भया हामी ताकीती गरुला । सहर कलकत्तामा भयाको चिजबीज नजर हुंछ भन्या नजर गराउला औ गढि, कील्ला, फौज, पल्टन्, षर्जाना, हात हतिमार, कलघर, नाच, तमासा, नजर गराउला । हजुर जाहा पाउ लाग्नुहोला साहेबानहरु वडो षातीर गर्नन् । वेलायत जादा वाटामा वडावडा सहर छन् । ताहा वडा साहाबान् लाठ टुक जर्णेल कर्णेल ब्रीष जगा जगाका पातसाहासित भेट् मुलाकाट् होला । हजुरलाई १९ तोपको सलामी दिनन् । गढि, कील्ला, नाच, तमासा फौज, पल्टन् नजर गराउनन् । जगा जगामा जाफत गर्नन् । वडो षातिर गर्नन् भनि लाठ डिपटि पारमेन्ट कौसलीया साहावान गैह्रले बिन्ती गर्‍या । डेरासम्म पुर्‍याई डेरामा झारू बढारू गर्‍या टहलुवा र डेहुलीमा पहरा राषि विदा भैगया ।

भोलीपल्ट असि गोटा षसि, १० मुरि चावल, यही अंसार च्यूरा, नुन्, घ्यू, तेल, बेसार, हलवाईका रोती, मोरवा, अचार, दही, केराउ, षोर्सानी, तमाषु, पान, सुपारि, फलफुल, मसला जो चाहीन्या सराजाम्सग भारि ज्याफत, दीया । नेपालदेषि पाउ रववारी गयाका रैफल पल्टन्, वादसाही वाजा वजाउन्या वाजावाल लाजिमा गैह्र, ताहा रह्याका टहलुवा गैह्र, हेहुडीदार वारिका मालि ६०।५० जना सबैलाई २०।२५ दीनसम्म षान्या सराजाम पुग्यो यादै रह्या । तादेषि २ गडी रात जादा श्री प्राइम मिनिष्टर साहेब उनैका २ भाइ पगरि गैन्हलाई नाच तमासा हेर्न आउनु ।

भंन्या लाठवाट निमता पठाया र गाठाउ लग्नुभयो । सबै पगरि स्मेत् दर्वारमा पाउ लाग्नुभयो । ताहाका साहवानहरू तिनका मोम लेडी साहेवहरू भारि गहना पोसाक लाई हजार वाह्र सय वादसाहि वाजाका चालमा वंठकमा नाच तमासा गर्न लाग्या-का थिया । तेस वीचमा श्री प्राइम मिनिष्टर साहेव पुग्नुभयो र लाठ साहेव लेडी साहेवहरूले गुडमानी पातीर गरि कुर्सिमा वसाई नाच तमासा देषाया। ताहा षान्या सराजाम तयार थियो र लि षान वस्या र सवैले हातमा 'श्रापका प्याला लि वस्या चक-साहेव टन्यो[२] र कुइन वीकटुरियाकि जैरहे, प्रिन्सालवट्की[३] जैरहे, लाठ दिलहुसिकी[४] जैरहे, नेपालका श्री प्राइम मिनिष्टर याण्ड कम्यांडर इन चिफ जनरल जङ्ग वहादुर कुवर राणाजीकी जैरहे भनि चारका नाउ प्याला उठाई सवैले षाया । भोज षादामा यस्तो रीत रहेछ।

भोलिवेर कलकत्ता सहर छाउनी, अडा, कील्ला, वाघवगैचा तलाउ, सहर, वजार, पानिका कलघर, कपडा वन्या, केप वन्या, रुपैआका टक मार्न्या, पैसाका टक मार्न्या, चीटि कागजमा छाप मार्न्या कलले गर्न्या काम् भीत्र वाहीर सवै अनोठा काम देषाया। ताहादेषी श्री प्राइम मिनिष्टर साहेववाट् म श्री जगंनाथजीको दर्सन गर्नु जांछु । जगा जगा मियानाको डाक वसाई देउ भनि मर्जी भयो र वही घडी डाकको रमाना भयो । कलकत्तादेषी ४ दीनमा ठाकुरका पुरिमा पुगि दर्सन गरि नित्य पुजालाई चार हजार रुपैआ अठका राषी चार दीनमा कलकत्ता दाषील हुनुभयो। ताहादेषी २०।२२ दीन मुकाम भयो । जो चाहिन्या सराजाम

---

१. शराब ( रक्सी )।
२. ( ? )
३. प्रिन्स अलवर्ट ।
४. डलहाउसी ( ? )

असवाव हैटन भन्या धु वा कलको जाहाजमा भर्ना गरि तेसै जाहाजमा सवार भै वेलायेत तर्फ पालनुभयो ।

## जहाजमा

त्यो जाहाज कस्तो थियो भन्या २०० हात लामो, ५० हात गज, ७ हात उचा, हजार वाह्र सये मानिस वस्याका थिया । जिय पीछे पलंग, बीछ्याउना, षान्याकुरा १ दीनमा ३ वषत मेवा पनि दाल भात षाया रोटि, मासु, घ्यू, चिनि, फलफुल ज्या इच्छा छ सो षान दिंछन् । जाहाजैमा वातसाहि वाजा तयार छन् । अंग्रेज-का मीमहरू, साहेवानहरू नाच तमासा गर्दछन् । कोही वन्दूकको तारा हांछन्, कोही किताप पढदछन्, कोही कौसिमा वसि हावा षांछन्, कोहि देसदेसका कुरा कथाहा शास्त्रका कुरा कीताव हेर्दछन् । वाह्र सये मानिस तेस जाहाजमा रह्या का छन्, आपना काम गर्दछन्, षल्यामल्या कोही गर्दैनन् । यक मानिस् पनि वोलर्दैनन् । षल सि-हरू कोही मर्दवान ट कछन, कोही घडीमा छन्, कोही जहाज फर उल्या वलमा[1] वस्याका छन्, कोही दुर्बेन हेरि वस्याको छन्, कोही गोलव ल छन्, कोही षान्या सराजाम तयार गर्दछन् । कसैले जलका जन्तु, षसि, भेड, वोका पल्याकलाई अहरा पनि दिंछन् । कोही दुहुना गाई, घोडा जाहाजका लगरमा वस्याका छन् । वषतमा तीनलाई घासदाना दिंछन् । कोही जाहाजका लगरमा वस्याका छन् । वषतमा चढाउछन्, वषतमा षस लदछन् । त्यो जहाजमा चार तोप रह्याका छन् । ती तोपमा गोलंदाज, पलासि आठौ प्रहर तयार रह्याका छन् । वषतमा तोप हान्छन् ।

---

[1] (??)

जहाजी डाकुका भयले डाकुसग लडाइ गर्न भनि ति तोप रह्याका छन् । आफ्ना आफ्ना काममा रुजु रह्याका छन् । कसैले अह्राउनु पर्दैन, आफ्ना पालासित आठौ प्रहर षडा छन् । यस्ता रितले जहाज चलाउदा रात दीन गरि २ सये कोस हीड्दछ ।

यस्ता रितले हिड्दा निरालये समुद्रमा पुग्यो । डाडा, पाहाड, रूष, वृक्ष्य, जमीन कहि छैनन । जलैमा सुर्य्य उदाउछन, जलैमा अस्ताउछन । जलका माछा तोरि चरा जत्रा २।३ हजारका फौज गोलीका दरेससम्म उडन्या कोही माछा वल्देल जत्रा वगाल दा वगाल उड्दै भागन्या । [1]वग्रल भन्याको माछा नजिकमा देषीयेन ४।५ कोस टाढा तेस माछाले मुषको पानि बाहीर सास फेर्दा फल्याको धरहरा जत्रो अलगो फोहरा छाड्याको देषिंथ्यो । त्यो जाहाज चलदा पछिल्तिर हीर्दा दहि मथ्या जस्तो सेपेत् कोस भर सम्म जहाजका रूलका जोरले समुद्र मथिजादा फीन उठन्या, हावा आउदा बडा बडा पाहाड् जस्ता समुद्रको लहरि आउदा जाहाज कल ठाडो कैले तेह्रो हुदा कसैलाई रिगटा लागन्या, कसैलाई वान्ता हुन्या, कसैलाई भात नरुचन्या, साह्रो हावा आउदा सुत्यामा पलंगवाट षसाउन्या, थापलो ठोकीन्या उडालन पलंगका षुट्टा समाती अडिनु पर्न्या । हावा नलाग्दा भन्या बडा आनन्दसित कौसिमा हावा षाई समुद्रको तमासा हेर्दै यस्ता रितले रहनुहुंथ्यो ।

रोजका वन्दुकका गोली दुइ तीन् सये श्री प्राइम मिनिष्टरवाट् समुद्रमा वोतल फाली कैल्हे समुद्रलमा वोतल भुंदाई चादमारि गर्नुहुंथ्यो । अंग्रजहरू पनि हामी वन्दुक हानामा षुब छौ भन्या

---

१. ह्वेल ( ? )

सेषि भयाका जोरि आउथ्या । कसैले सकेनन् । सबैले वहुत वयान गर्‍या । ती अंग्रेज, मीम, साहेवानहरू आपस्मा कुरा गर्‍या । मिनिष्टर साहेव उमेर भन्या कचा छ, काम भन्या नजान्याको केही छैन । कुरा पनि वहुत हुस्यहार, दीलका पनि वहु सुरा भयाका छन् । कुरा गर्दामा भन्या सबैलाई मोह गराउने यस्तो मोहरूपी छन । षादामा भन्या कसैलाई हेर्न दीदैनन, पानि छुनन् दीदैनन । केही मेवा, भाजी, तरकारि, फलफुल भडारवाट दील ई लाटलुट होला भनि दीदा गर्छन् । गाइ पनि आफै दुहछन् । उमेर[1] भन्या वडावडा वादसाहका जस्तो राषछन् । कुरा गर्दा वडो सेषिसित वोलछन् । हिन्दुस्थान्नी जस्तो लाचारि छैनन् भनि आपस्मा कुरा हुदा जान्या जान्या अंग्रेजले भन्या—प्राइम मिनिष्टर सुतंतर राजका हुन् । इन्का दर्वारमा राजादेषी मनि इमाथी अरू कोहि छैनन् । जंगि, मुलकि प्राइम् मिनिष्टर कौसलदेखि माथीका हुन । यस अर्थले आफ्ना मदत्मा रह्याका छन् भनि जान्याहरू भंछन् ।

कलकत्तादेषि ६ दिनका वाटा समुद्रका कीनारामा चिनापट्टन सहर भारि गुलजार रहेछ । तहा वडा—वडा महाजन वस्याका छन् । ताहा येक लाठ साहेव चार पल्टन् ली छाउनी हाली वस्याका छन् । ताहा अग्निवोट् जाहाज यक दीन समुद्रमा मुकाम गरि रसद, पानि भजीतकोरि[2] पथरका गोल जाहाजमा भरि लंका टापुसम्म पुगन्या गरि चाहीन्या चीजवीजानु पर्‍या रहेछ र जाहाज कीनारा भयो । ताहा लाट साहेवले नेपालका श्री प्राइम् मिनिष्टर साहेवलाई लयनगडा गरि सलामी गर्‍या । १९ तोपको वढाई

---

१. उमेद । २. ?

सलामी गऱ्या । लाठ आफ्नु वगीमा चढि भेट गर्न आया । मुल-कात्त भयो । वहुत षातिर गऱ्या । डेराडंडा पान्या चिजको जाफत गऱ्या । ताहा गढि, कील्ला, सहर, छाउनी, हाट्, दोकान, वजार, फौज, पल्टन् सवै देषाया । ताहाका छोता वडा मानिस् सामेल भै सलाम गऱ्या । लाषौ मानिसको भीडा भयो । ताहादेषी लंका टापुतर्फ सवारि भयो ।

## लंका र एडेन

७ दीनमा लंका टापु पुगनुभयो । तहा पुग्दा कस्तो भयो भन्या सवा लाष मानिस सामेल थिया । वडा मानिस् घोडामा सवारी भै आयाका थिया । मर्दाना जनाना वरावर थिया । येक तर्फ छाउनी पल्टन् षडा थियो । वातसाही वाजा वज्न लाग्याको थियो । तोपको सलामी हुन लाग्याका थीयो । तसै वीचमा [1]ताहा लाठ् साहेव सवारिलाइ वगी ली भेट मुलाकात गर्न आया । उनका साठमा अरू वडा साहेवहरू पनी थीया । ती नेप लंका श्री प्राइम् मिनिष्टर साहेवसित आई हातमा समाति गुडमानि[2] सलाम गऱ्या । षयेर भेट्मी प्याट्[3] भयो । यक वगीमा सवारभै सहर, छाउनी, हाट, वजार, गढि, कील्ला, फौज, पल्टन्, षर्वजाना सवै देषाया । परेट्मा सलामी गराया । डेरामा लगी सव चिजको जाफत दिया । आफ्नाआफ्ना घर गया ।

त्यो मुलुक कस्तो रहेछ भन्या जंगल रहेछ । जंगलभित्र सहर छ । तेस सहरका वजारमा चिज वस्तु कोही थाहा ठेगाना छैन । भाडाको वजार, कपडाको वजार, पत्थर, काठ, गोलको वजार

---

१. ताहा (?)      २. गुड मनिङ् ?      ३. ?

भरिपुर्ण भयाको अति गुलजार छ । तेस जंगलमा मसला ल्वाङ्, सुपारि, मरिच, जायफल, छोहरा, वदाम, नरिवल, सुकमेल, संपुर्न मसला छन्—मेवा, आँप, कटहर, सुनतला, नासपाति, स्याउ, दाष, दारिम्, अंगुर, पेस्ता । तेस जंगलमा हाती, गैंडा, जरायो, वाग, भालु पनि वहुत छन् । चराहरू पनि जात—जातका छन् । तेस जंगलका टापुमा १ दीनमा ३ काल छिन । वाह्र मास वरोवर रहेछ । वेहान प्रहरमा जाडो हुन्या, सितकाल मध्यानमा गर्मी हुन्या, पुसकाल चौथा प्रहरमा वर्षा हुन्या, असारको मेघ मैं गर्जन्या, वीजुली चमकन्या, वाह्रै मैन्हा षेत रोपन्या धान पाकडो रहेछ । गडिको पर्मानाा रातदीन वरोवरति घडि सवै हुदछन् ।

अघि तेस मुलुकमा राक्षेसको राज रहेछ । राक्षसको प्रलय भया पछि ४ सय वर्ष वैरान भयेछ । फेरी सिजाली मल्ल मानिस् ताहा आई रजाई गऱ्याछन् । पछी ति सिजाली राजा २ भाईले मुलुक वाडी दुई राजा भया छन् । फेरी यक्ष भन्या अर्कै टापुका वादसाहले त्यो मुलुक मारी जक्ष राजा भयाछन् । जक्षलाई माडी अंग्रेजले रजाई गऱ्याका रहेछन् । अंग्रेजका यक लाठ् साहेव, ४ जर्णल, गोरष पल्टन्, काला पल्टन् राषी छाउनी वनाई वस्याका रहेछन् । त्यो जगा धेरै वैरान छ । गुल्जार हुदैछ । तेस टापुमा २ दीन मुकाम गरी ८ दीनलाई भारा, तर्कारी, रसद, पानी, गोल जाह जमा भरी ताहादेषी पस्चीम् रस्ता चला भयो ।

८ दीन्मा अइडन् भन्या टापुमा पुगीयो ताहा अंग्रेजका चार पल्टन् गोरा रह्या छन । यक जर्णल, यक कर्णल मालीक रह्याछन् । जज कीनारा पुग्दा तोपको सलामी दीया । पुतल तोप कुधि लाई साना जाहाजमा चढी ती जर्णल, कर्णल भेट्—मुलाकात् गन आया ।

वहुत षातीर गऱ्या । तेसै जगाका वीस्तार वीन्ती गऱ्या । त्यो तापु कस्तो छ भंन्या पत्थर मात्र छ । ताहा रूष वृक्ष, झार पात केही उम्रँदैन् । माटो छैन । तेस जगामा अंग्रेजहरूको जाहाज आउदा जाहाज दाकुले लुटी मागि समाती दिदा ताहाका वादसाहासित लडाइ गरि जीती तेसं जगामा ४ पल्टन् राषी गढी कील्ला वनाई अंग्रेज वस्याका छन् । ताहा भाजि, तर्कारि, साग पाट्, फलफुल्-को वघैचा वनाई भाजि, तर्कारि लाई नीर्वाह गरि वस्याका छन् । वरावर पहरा षोपि वारुद् हाली पहरा षोपि गढी कील्ला वनाउन लायाको छ । अंग्रेजका हीकमतलाई सारा जाहानमा सकदैनन् ।

## *इजिप्ट र माल्टा*

ताहादेषी आठ दिनमा सुइज वादसाहको मुलुक[1]मा पुगीयौ । तेस जगामा जाहाज फिरिन्दो रहेछ । त्यो जाहाज वेलायत् पुग्दैन । ताहा देषी ३० कोस जमीनमा वस्ति पनि छैन, पानी पनि छैन । तेस जगामा सुइज वाछा[2]लाई अंग्रेजले तीन लाष रुपंआ दी त्यो ३० कोस जमीन्मा ६।६ घाडा लाग्याको वगी ८ डाक राष्याका छन् । कलकत्तादेषी गयाको जाहाजका मानिस, असवाव ती डाकका वगिमा चढाई ६ प्रहर[3]मा [4]अलषजजरिनदीमा पुऱ्याइदीया । ताहा १ वडो सहर छ । वदसाहा तेहि सहरमा वस्या-का छन् । मुसलमानदेषी अर्को जात छैन् । मानिस राम्रा–राम्रा छन् । जनानाहरू मुष कपडाले छोपी हीडदछन । तेस जागामा भाजि, तर्कारि, फलफुल, गहुको षेती गर्न्या समर्थ जगा छ । हात, दोकान, वहुत् गुल्जार सहर छ । पर्षाल मजगुत जगा

---

१. इजिप्ट ( ? )  २. वादशाह ।

३ प्रहर = ३ घण्टा  ४. अलेक्सजेंड्रिया ( ? )

रहेछ । ताहाका बादसाहाले श्री प्राइम् मिनिष्टरलाई मुलाकात् गरि बहुत षातिर गरिया । मासिना चावल, आटाहरू, चीनि, मेवा प्रसस्त भरि जाफत दि ताहा ❘ दिन मुकाम गरि नील नदीका साना जाहाजमा वहिता¹ गरि समुद्रमा पुगे र ताहा वेलायतवाट फिरोजा भंन्याको ठुलो जाहाज आयाको रहेछ । तेस जाहाजमा सवारि भै चलान भया ।

७ दीनमा माल्टा भंन्या सहरमा पुग्दा क्या तमासा देषीयो भंन्या समुद्रका तीरमा अनौठा घर, सहर, वजार, ²गधी, कील्ला भारि वजार, अनौठा चलन, पोसाक, वाघ–वगैचा, ताहाको षेती, ताहाको जना वर मानिसहरू देषदा अति सुन्दर जनानाहरू पनि आइ षचीत् भयाका भारी गहना, पोसाक लायाका चंद्रमा विच जस्ता मुष, तेल्का धारा जस्ता नाष, कपालपज³ जस्ता नेत्र भयाका अति सुन्दरी जो देष्यो उस्तै । वीलायतको नजिक् हुनाले केहि झलक देषदा पनि जयना⁴ जस्तो । वहादेषी छ दीनमा जीवपार⁵ भयाको सहरमा पुग्यो । ❘ पल्टन् ताहा वस्याको रहेछ । त्यो जगा देषदा पनि केहि मोह गरायो । ताहा ५ घंटा वसि कुच भयो ।

१. ( ? ) २ गढी । ३. कमलपत्र ( ? )
४. सपना ? ५. जिब्राल्टर ?

# बेलाइतमा

## लंडन प्रवेश

४ दीनमा वीलायत् उत्रन्या घाट्मा पुग्दा कस्तो भयो भन्या सपनामा पो आञ्यू की अथवा धर्म कमायाको मन्या पछी इंद्र सनमा पुगीन्छ भंथ्या इंद्रासन यहि हो की भन्या जस्तो लाग्दन्। क्या अर्थले भन्या ताहा अति राम्रो सहर छ। हत, दोकान्, बाग—वगैंचा ताहाका मानिस्को रूप देषदा ज्या देख्यो तसवीर देषिन्या। ताहाका जनानाहरू श्री प्राइम् मिनिष्टर साहेबका नजीक्मा आई सलाम गन्या। तीनका रूप देषदा मीज्याद, षातिर गन्याका सुन्दा इ अपसरा हुन् की भन्या जस्तो लागन्थ्या, चंद्रमाका विम्व जस्ता उज्वर मोहडा, वडा—वडा लामा नेत्र, तेलका धारा झहि नाक्, घाटीमा तीन रेखा भयाका, हातीका सुड् जस्तो छाति, कम्वर छिन्याका, जांग फुक्याका, वडा पल्लेवर[1] उत्रा, पान षाया जस्ता लाल ओषा[2], मिल्याका दात। पोशाक—लहंगा, मोजा, पंजा, रुमाल्, कपलमा अति सुन्दर टोपी, गह[3], कुचीन्, साटन्, रेसम्, काला वस्तुका झलर भयाको पोसाक आगमा रसाया जस्ता मोल्याका, वडा हिसि भयाका, नम्र भै वोलन्या। १।२ मात्र होइनन्, सबै उस्तै छन्। यस्ता रीतका मानिस हजार वाह्र सय आइ पडा भया। नराम्रा दुवला देषनु कोहि छैन्। जो मानिस देष्यो

---

१. ? २. ओठ (?) ३. गहुना (?)

राम्रो, ज्या चिज देष्यो राम्रै देषिंछ । यस्तो तमासा देषदा मन लाई मोह भयो ।

यस्ता जगामा जाह.जदेषी उत्री यक वडा हवेलिमा डेरा भया र वीह नको भान्साको तयारी हुन लाग्याक थीयो । श्री प्रइम मीनिष्टर साहेववाट मेगलोट् भन्याका अंग्रेज जर्णेलका छोरा १ थीया, लेफटेन लालसिं पनि अंग्रेजी पढनाका हुसीयार थीया, इ २ जना-लाई ताहांदेषी लंडन सहर ४० कोस भोली हामी आउला तीमीहरु अल्हे रेलगाडामा चढिजाउ वाहां सर्कारवाट डेरा षटायाको भया हेरि षवर ल्याउनु नषटायाको भया यक असल् घरको ठेकाना गरि आउनु भनि दुइ जना गरि आउनु भनि २ जनालाइ पठाउनु भयो र गया ।

४० कोसको वाटो रेलगाडामा सवारी भै जादा ५ घडिमा पुग्या छन् । वाहाका कारींदाहरूलाई सोध्या र आहा डेरा तयार छ, श्री प्राइम् मीनीष्टरको सवारी अल्हे भीकाउन्‌ भन्या छन् र तारमा गै तारवाट् ताहा गोषाका श्री प्राइम् मीनीष्टर साहेव आई पुग्नु भयछ, आहा रिचन्ट कारिज घरमा डेरा षटायाको छ, रेल-गाडामा सवारी गराई चलाइ ल्याउ भन्या केवरतर्[१] साहेवलाई तारमा कुरा तिन् मीलीटमा आयाका छन । त्यो साहेव डौडी आयो र लंडन सहरदेषी हुकुम आयो, अल्हे रेलगाडामा सवारि भै ५ घडीमा ४० कोस लंडन् सहर क्यारिज घरमा आइपुग्नु भयो । त्यो घर देषदा वहुत षुसि हुनुभयो ।

## डेरा र शहर

वीलायत सहरमा श्री प्राइम् मीनीष्टर साहेवलाई डेरा कस्तो षटायाको रहेछ भन्या वहुत् रमाइला ठाउमा लंडन् सहरका विचमा तीमस[1] नदिका तिरमा रीजवन्ट क्यारिज भन्याको नामोद घर रहेछ । त्यो घर कस्तो छ भन्या पत्थरको गाडा[2] पथरैको छाना, वजलेप लाग्याको, पतला भयाको, उतरतिर सुन्दर वगैचा तीमस नदिको पाहाड[3],पुर्वतिर अष्वलषाना, दक्षिणतिर मूल गल्लीको वाहाड[3], पश्चिमगरि वडे पतागीरि[4] ग्यास वत्तीको रोसनी जल्याको, वाहाडघर चीत्रकार भयाको, कोठापीछे भुल, चादनि, पलंग, विछ्याउन्या, सतरंजि, गलैचा विछ्याइ राष्याको । मेच, कवज जगा—जगामा राष्याका छन् । काँचका भारि, कोपरा तयार छन् । कोठाइपीछे तसवीर तास्याका—कोठा २०।२५ छन् । भारी वैठक, तसवीर भाडवती चारै तरफ वडा–वडा ऐना लाग्याको मेच हाल्याको, भारी गलैचा वीछ्यायाको, अती सोभा भयाको वैठक छ । तेस घरका सुसार्‍या २ स्वास्नि[5]लाई र २ लोग[6]न्यालाइ दर्माहा मैन्हाको चलीस रुपैञा स्वासिनलाई असी रुपञा, तेस घरको वाल मैन्हाका १२५०, तेस घरमा वसछन् उनैले तीर्नु पर्छ ।

त्यो सहर कस्तो छ भन्या वषान् गरि सकनु छैन । सबै लक्षणले जुक्त भयाको । तिमस नदी उत्तरवाहिनि भै वह्याको छन् । ३०।४० कोसको चौडा गीर्दा भयाको ज्यावद घर छन् । पश्चि

१. टेम्स । २. गाह्रा ( ? ) ३. बाहाड ( ? )
४. पर्टाङ्ग्नी । ५. स्वास्नीमानिस । ६. लोग्नेमानिस ।

ह बेलि, सहरका बीचमा बेकम्मा घर १ पनि छैन । पथरैको गारो पथर्‌को छाना, गारा, भीत्ता व्रज लेप गर्‍याको छन । पथरका भीगटि छानामा भील्याका सीसा डाल्या जस्ता । सारा सहरै घर झँमाका झाल लाग्याका छन् । सारा सहरका घरमा सुन–चादीका मोलम्वा गरि चीत्रकार भयाका छन् । चोक, पटांगीनी, गल्लि सारा पथरैले छाप्याका छन् । नाल देषनु कहीं छैन । भीत्रभीत्रै दवाई तिमस नदिका निकाल्याका छन् । हीलो, धुलो, नर्क, कसि-गर देषनु कहीं छैन ★ घर घरै चोक, पटांगीनी, साना वगैचा, फल फुल, पानलता लाग्याका छन । रुखमा पहेलो पात छैन । भुँमा सुक्याको पात छैन ★ सफा गरि राष्याका छन् । जात जातका फुल फुली रह्याका छन् । गल्लिमा तिन् सडक जोरि बन्याका छन् । क्या अर्थले भन्या यक सडक्मा पैदल मानीस् हीडदछन, यक सडक्मा घोडा सवारि चढि हिडछन्, यक सडक् वगीका स वार हिडदछन । रात–दीन बरावर, लाषौ वगीका स वार बन्याकै छन् । आठौ प्रहर मानिस, वगि षाली हुदैन् । क्या अर्थले भन्या रात दिन यकै उज्यालो छ । ग्यास वत्ति गल्लिमा लयन्का लयन् जल्याकै छन् । सारा घर–घरका झ्याल–झ्यालमा भरराात वल्याकै छन् । चंद्रमा जोति जस्तो तेज भयाका सारा सहरमा तिहार दिपमालीका गर्न्या जस्तो—सदा कोठा, चोटा, कौसी, अटाली, भडार, जाजखान, अस्तवलषाना, चोक, पटांगीनी तिमस नदिका वारी–पारि पुल साघु, सहर भीत्र, वाहिर—सर्वत्र ग्यासवत्तिको रोसनि जल्याकैछ ।

---

★ ★ यति दोहोरिएको छ ।

## अति सुखी जीवन

[1]पापानि भन्याका नदिका पानि तावाका डुंग्रावाट तलाउमा थैचियाकोछ। तेस तलाउका वरिपरि सबै घरमा नहरलाई तावाका डुंग्रावाट झीक्याको छ। चाहीयामा टुटी घुमाइदीयो, पानी लीयो, फेरि बंद गरिदीयो। दाउरा भन्या तेस मुलुकलाई चाहीदोरहे (न) छन्। क्या अर्थले भन्या पथरको गोल हुदो रहेछ। तेल वलेझैं बलदो रहेछ। सुघर पनि, सस्तो पनि। तीमस नदिका कुपाले जाहाजमा हाली ल्याउछन्, घर-घर पु-यइदींछन्। त्यो गोलको षानि लंडन् सहरदेषी सय डेढ सय कोस टाढा छ। त्यो गोल्ले भात पकाउछन्। तापन्, मेगजीनको काम्, फलाम सिसा ढाल्न्या, धुवाका जाहाज चलाउन्या, ग्यासवत्ति जलाउन्या, नाना तह्नको कल चलाउन्या तेहि गोल छ। घर वन्याउना काठ, जाहाज—रेलगाडी वन्याउन्या काठ ज्यावढ् १५ सय कोस समुद्र पारवाट् जाहाजमा हाली समुद्रले ल्याई दींछन्। आगो, पानि, वतास अंग्रेजले कमारो तुल्याई राष्याको छ।

तेस मुलुकका मानिस् भारी कोही वोकदैन्। भारी जाहाज रेलगाडा, वगि मात्र वोकछन्। ताहाका मानिस् अति सुषि छन्। मैला फाट्याका कपडा कोही लाउँदैनन्। आगमा मयल कोही राषदैनन्। ताहा पानिले सावुन घसि वुरुस लाई नुहाउन्या, सवैका मुष चंद्रमा अस्तो उज्यालो। पोशाक भन्या वादसाहदेषि तेली, धोवीसम्म यकै तर्फको पोसाक लाउन्या सवै। वडा २ को मात्र मसिनु घोटाको पत्रो[2] मात्र छ, तलास सवैको यकै छ।

१. (?) २. (?)

लोगन्याहरूका पोसाक् तोप, कुर्थी, चुस्ता, गलेबंद, मोजा, जुत्ता लायाका। स्वास्निहरू छिटका भया साटन्‌का लहगा, सटोटाप साटन्‌का रूमाल बढनाका पंजा, मोजा, जुत्ता रंगिचंगी पोसाक स्वास्निहरूको त वर यकैछ। पोसाक लाउन, षान, थितीसग रहन्या, सुतन्या, उठन्या, कहीं जान्या सब घडीको प्रमाण छ। सबका साठमा घडी छन। घर—घरका भीत्तामा घडि राषन्या, षरि टासीयाका छन। कही गौढी, पर्षालमा पनी घडी टासियाका छन्। जाहा–जाहा हेर्न मन लाग्यो ताहा घडी देषीछ। छोटा-वडा कसैले ठुलो सोर गरि नबोलने, ठट्टा अर्काको उत्तारनि नीन्दा कोहि गर्दैन, झगडा गर्दैनन्। वडा सौलसीत् बोलन्या, छोडा—वडासीत मीजाज राषन्या यक सैं यक अकल्मन्द छन। नाच-तमासा जगा–जगामा हुंछ। जाहा नाच—तमासा हुंछ ताहा लाषौ मानिस्‌को भीड लाग्याकै हुंछ।

थाना, पुलीस्, सिपाही पहरा छन्। तर् सिपाही क्या गर्दछन् भन्या सारा सहर भीत्र, वाहिर, दोबाटा, डेउडी जगा–जगामा षडि पहरा गर्दछन्। आठौ प्रहर रमन् गर्दछन। चोर, डाँट, लुच्चा, झगरा गर्न्या झगडियालाई पक्री ल्याउनु; दिनमा कति मर्दछन्, कति जन्मछन्, अरू मुलुक्‌का मुसाफेर कति आनछन् त्यो षवर ल्याउनु; लुला, लँगरा, काना, षोरडा कोही पक्ष नभयाका आया गरिपषाना लगी लाउ लेषाई बंद गरिदीनु उर्दि छ। सहर हुलदंगा काहि भयो भन्या पक्री ल्याउनु। वलले नपुग्या जलदि षवर थानामा ल्याउनु भनि सहिलान छ। यस्ता तह्रसित पुलीसको पहरा सहरमा।

१. (?)

सब दुनीआ, फौज, पल्टन्, महाजन्, दोकानदार, भारादार, बादसाह, गरिवगुर्वा सारा जहान् बडा धनि मांछन् । आफ्ना थीतीमा रह्याका छन् । इन दीनौमा रामाराज्य तेही मुलुकमा रहेछ । जौन गल्लिमा गयो हात दोकान् भारी-भारि छन् । जौन चीजवीज षोजो दोश्रो दोकानमा जानु पर्दैन । मालको मोल नीरुष गरि मोल माल लेष्याको हुंछ । रुपैया दियो, माल लीयो । मोल कसाकस गरुला भंन पाउदैन् । जो लेष्याको सदर छ । यस मुलुकमा यो माल छ, यो माल छैन् भंनु केही छैन् । वाह्र वीलायेत्को चिज भयो जाहाजले वोकी ल्याउछ । सब वृक्ष, फलफुल, मेवा, अनाज, कपडा, भाडा, वर्तन, सुना, चादी, नवरत्न, जलका जानवर, थलका पशु-पंक्षि, पृथीवीमा भयाको चीज, नक्सा, वीलायत्मा महजुदछ । अकलमन्द पनि इतै रह्याछन् । कालीगड्, वेपारि, मालको पारष जान्या पनि, सुघर पनि, धनि पनि, धर्मसास्त्र निति-सास्त्र जान्या पनि, लक्षिमले देष्याका पनि इनै रह्याछन् । इनको रीस गरि कसैको निर्वाह छैन् । इन दिनौमा देउता, राक्षस्, दानव स्वर्गमा गया छन् । यस मन्द[१] लोकमा मनुषैको मात्र राज्य रहेछ । यस लोकमा पनि इलिण्ड[२]वेलायत्-मा निञ धर्म सत्य रह्याको ताहि रहेछ भन्या जस्तो अरू मुलुकवाट जान्या मानिसहरू मान्दछन् ।

पृथ्वीको अंत कोहि पाउदैनन् तापनि चलन् वेहोरा सुन्दा देषीछ इनि दीनमा अंग्रेजका अकल् लीन्या वादसाह वलिया छन् । क्या अर्थले भन्या इनका जाहाजको काम्, तोप, वन्दुकका काम्, फौज-पल्टन्को अयन्—अकवायत मुलुक थियो । थिति, चैहीसीतको घाक, टकको सलतनत् वाह्रै तोपीका वादसाहाले लुकी चोरी सलतनत गरिलीया छन् र मन मोलाई काम वलीयो गरी रह्याछन् ।

१. मर्त्य (?) २. इङ्गल्याण्ड (?)

दृष्टांत हेर—लाहुरमा जाहासम्म रंजितसिं थीयो ताहासम्म अंग्रेज-लाई उनले चिन्हाको थीयो। अंग्रेज नोकरि पनि थीया। अंग्रेजको मतलव पनि थीयो। षजाना, तोप, वन्दुक, फौज, पल्टन् भारी अयन्मा रष्याको थियो। मुषले सलतन् मीलाई पेट आफ्ना वलियो गरि रह्याका थिया र उनको मजगुत्, उनको सलतन देषदा अंग्रेजहरू गमन सक्तैनथ्या। रंजितसिं मर्यापछि लाहुरमा आफ्ना घरमा सलतन् वीग्र्यो। अंनमा कोही रहेनन। फौजले मनपरि गर्दा लाहुर उड्यो। तसर्थं आफ्ना घर नमीली देस मील्दैन। मुलुक ढेरै देष्यापछि वुधि ठेगानामा आउछ। तेस वषतमा आफ्ना राजेको सजगुन[1], वर्कत् अंसार गर्नु पर्छ।

## जङ्गबहादुरको स्वागत

१९०७ साल्का जेष्ट मैन्हाका दीन् १५ जादा वेलायत् लंडन् सहरमा श्री प्राइम् मीनीष्टर साहेव पुग्नुभयो। ताहा रिज वन्त क्यारिज घरमा डेरा गर्नु भयो। ताहाका प्राइम् मीनीष्टर र कम्यांडर-इन-चिफ, लाठ साहेवहरू, टुकलिन्ट,[2] जर्णेल, कर्णेल, कंपनि साहेवान्, पारमेन्ट कौसलीया साहेवान्हरू, भैयाद, वादसाहका कांछा वावुहरू वेलायत् सहर क्यानासुदारहरू[3] श्री प्राइम् मिनीष्टर साहेवलाई भेट—मुलाकात गर्न सवै आया। वहुत षातिर गर्‍या। तपाईं आहा आउनाले वढिया भयो। क्या अर्थले भन्या हिन्दुसथान वाट तपाञी जस्ता ठुला मानिस् आहा कोही आयाको छैनन्। तपाञीको रवाफ देषदा आहाका छोडा-वडा सवैलाइ गोर्षा

१. (?) २. (?) ३. (?)

भन्याको ठुलो रह्या छ भन्या धाक् पनि भयो । आह्ाका भारादार, मर्कारसीत् पनि प्रिती रह्यो । अब उप्रान्त दोस्तीमा फल्वल कैल्हे हुवैन् भनि वडो षातिर वात गन्या ।

ताहा उप्रान्त लंडन् सहरका भारादार, वडा साहेववानहरूले पार्लसीत् आज यकाले भोली यकाले यस्तै रितले वेलायतमा वसं-ज्याल् दीनहुं श्री मीनीष्टर साहेवलाई नीमतो गरि रातमा आफ्ना घर लगी षातिर गर्न्या । तेस दिं ज्यावद साहेवानहरू तीन्का मीम साहेव, लेडी साहेव मीसि जमा भया । भारी गहना, पोसाक् लाया-का भारादारका स्वास्नि,छोरि, वुहारी सबै आउछन्, श्रीमीनिष्टर साहेवलाई हात समाति गुडमानी सलाम गर्छन । सारा आंग, सिर झुकाई वोलछन् । लोगन्याहरू वरपर लागी वस्थ्या; स्वास्निहरू अघि सरि षयर मीजास् पुछन्या, गहना—कपडा हेर्न्या, वडो षातिर गरि वोलन्या । लाठ, डुक साहेवानहरू पनि आफ्ना छोरि, वुहारी राम्रा-राम्रा तरुणि-तरुणी अघि राषी इनलाई तपाओंले प्रसंद गर्‍यौ की गरेनौ भनि श्री मीनीष्टर साहेवलाई सोधन्या । दाहिन्या वाउ अघि-पछि राषिदिन्या । तीनका रूपदेषी र जोभन, भारी गह-ना—पोसाक्, तिनका सफाइ, मुषको श्री देषदा दसैं इन्द्रीय जिति रहन्या सुकदेव स्वामीलाई पनि मोह गराउन्या, अति सुरि, अति चंचलि, तीन्का रूपको वर्णन गर्न सकीदैन ।

ती वैठक् कस्ता छन् भन्या चीत्रगुहले लेषा जस्तो । अैना, तसवीर, झाडवत्ती, भारी वीछयाउन्या, मेच, कवज जगा-जगामा हाली अत्तरको षुसवी नाना तह्रका फूल्को जगजगायमान गरि सुन -चादीका भाडा टीपॉलमा झलावर पारी राष्याका छन् । ताहा वादसाही वाजा वजन लाग्याका, भारी कपडा-गहना लाई मीम

साहेबहरू नाचन लाग्याका छन । यकतर्फ षान्या सराजाम तयार छन् । यकतर्फ जात-जातका रोटि, मेवा, मसला, मोरवा, मासु सुन-चादीका भाडामा तयार छन । वडा-वडा लाट, डक साहवानहरू कुर्सिमा वस्याका; ताहा इंद्रका अपसरा, चंद्रमाका विंव जस्ता मुष भयाका, कामकन्दला, उर्वसी जस्ता परि नाचन लाग्याको; तेस वीचमा नेपाल्का श्री प्राइम मीनीष्टर साहेव जङ्ग-वहादुर कुंवर राणाजी तीनका भाई कर्णेल् जगतसम्सेर जङ्ग, धीर सम्सेर जङ्ग कुंवर राणाजी ३ भाइ तेस सभामा भारि गहना पोसाक् लायाको । कस्ता पोसाक् थीया भन्या पगरिमा हीरा जडाउ भयाको, चंद्रमा मोतीका, सोनी पन्नाका, लडकन नौरत्न-का लाग्याका, कनकन मोतीके सधवद¹ गलामा हीराको हार, पन्ना-मोतीको माला, हरिया मषमलमा समुर लाग्याको, मृजाई अंगमा अति मील्याको, मोती-हीरा जडाउ भयाको गलेवंद; हीरा, मानीक्, मोती, पन्ना जडीयाको डुवाल चपास् कम्वरवन्दि तासी कीनषावको पाइजामा, मोती काला वत्तु लाग्याका जुत्ता, कवुजा-मीषान् सुनको भयाको, तरवार कम्वरमा लडक्याको, हीरा जडाउ भयाको वाजुवन्द । यस्ता तह्नको पोसाक-गहना पहीली इंद्रीपुरी सभा जस्ता सभामा ठाडा हुदा झाडवतिका तेजले इ तीन भाइका गहना वल्दा कस्तो सोभा देषीयो भन्या जरासिंघका सभामा श्रीकृष्ण, भीमसेन्, अर्जुन जाहर भै जादा ति सभाका लोकले जो सोभा पायाथ्या सोही सोभा ताहा लोकहरूले मान्या । यस्तै तह्न-सित् सबै साहेबानूहरूले निमता गरि तीन महीनासम्म यस्तै नाच-तमासा देषाया ।

१. (?)

## थिति—बन्दोबस्त

इलौन्ड बेलायतको थिति ॥ ॥ बादसाहाका अँन—
बादसाहाले मुलुकको फौज-पल्टन्‌का थिती-वन्दोवस्त पनि
त्या-निरुाभ प्राइम मीनीष्टरले ठहराइ त्याको मंजुर गरी हुकुम
दीनु, भारादारहरूलाई पर्व-पर्वमा डाकी षातिर गर्नु, भोज षान
दिनु, नाच-तमाशा हेर्नु, कसैले रिझ गऱ्या भन्या सीरोपाउ दीनु,
सदा षुसिमा रहनु, आफ्ना प्रजालाई दया राषनु, कसैलाइ कुट-पीट
गाली पनि नगर्नु । क्या अर्थ भन्या चुकमा सजाय गर्न्या अघीदेषी
गरिचली आयाको अँनले पारमेन्ट कौसलले कसैको मोहवत
राषदैन भन्या कौन सर्कारले बुराई गर्नु, पाप बोक्नु ? राजनिति,
धर्मसास्त्रमा लेष्याको कुरा नगऱ्या पनि पाप लाग्छन्; गऱ्या पनि
पापछ; बढता गऱ्या पनि पाप छ। अघिदेखि चलि आयाको गर्नैपर्छ
भन्या पाप हो तापनि धर्म हो तापनि जसले यो निति बनाया
उसलाइ छ भन्या मतलबले बातसाहा कसैको जीउ मार्दैनन्।

धन हर्नु, कसैलाई डंड गर्नु, कुटनु, गाली गर्नु, कसैको जागीर
षोसनु, कसैलाइ जागीर दीनु, आफ्ना दर्वारको दौलथ म राजा हुँ,
मेरै धन हो भनि बादसाह पनि आफुषुसि गर्न पाउदैनन्। क्या अर्थले
भन्या त्यो दौलथ आर्जन्या भारादार, फौज, पल्टन्, दुनीआ षेती गरि
उपजाउन्या छन्; आधा राजाको भाग भनि दिन्छन्। वेपार गरि
उपजाउछन्, जगात भनिसार भनि दीन्छन्। वैरिको मुलुक मारि
ल्याउछन्, तापनि त्यो राजाको धन हो भनि दिन्छन्। जमीन

षोदी फलाम, तावो, सिसा, सुन, चांदी, न.वरात्न, ज्वाहार ल्याउ छन् तापनि राजाको भाग पर सार्छन् । आफ्नु मुलुकमा वैरिले मीचन् आयो भन्या इनै भारादार—सिपाहीले आफ्नु जिउ मराई वैरिको ज्यू मारि मुलुक थामछन् र आफ्ना मीहीनत् अन्सार ठुलो सानु भाग लाई मीली सबैले चीत्त बुझाई बंधान् बाधि जागिर भनि षान्छन् । वैरि आयाका वेलामा राजा रणभुमिमा जादैनन । अर्कालाइ पनि मार्दैनन्, आफु पनि मर्दैनन् । मान्र्या—मन्र्या भारादार हुन भन्या दर्वारका ढुकुटीको धन् सबै राजा हुन्छ । धनको काम् मुलुक् घटदाका बषतमा र बढदाका बषतमा चाहीन्छ । यकाको फर्मायस् त्यो धनको काम चल्दैन् । तसर्थ राजा भन्याका थिति हुन । राजाले फटीकको षम्बा हुनुपर्छ । गन्र्या–गराउन्या मंत्रि–भारादार हुन् । कसैले वीरित् गऱ्यो भन्या आफै भेछन्, आफै मराउछन् । राजाले मार्दैनन्, आफै अरि सरि काम गऱ्या राजाले पनि मांनुपर्छ भन्या थिति बाढीयाको छ । सो थीती नाघ्या पारमेन्ट कौसलबाट बादसाहा पनि बदला गर्छन् ।

भारादारहरूको थिति ॥ मुक्तियार प्राइम् मीनीष्टरले गन्र्या काम्—बादसाहा हजुरमा रहनु, कहि साध सोध नञा कामको अजमास गर्नु सोधन आया; र पारमेन्ट कोसलबाट् कहि हुकुम् बक्साउन आया; कम्यांडर–इन–चिफले जंगी फौजको नञा अजमास् साधन गऱ्या देस—देसका बादसाहा, राजा, नवाफहरू सीत्को सलतनत् षलापषत्र, धा, टक्को; आफ्ना मुलुकलो ठेक्दार मुलकीसाहेव, जज, कलकटर, जंगी–निजामतिको पजनी; देस—

देसमा रजिडन्टको पजनि, नीजामति रकमीको दर्माहा, दर्वारको मसलन्द पर्चको यति कामको नीक्सारि–पसारी साधसोध, तनषाह दिनु, पजनि गर्नु जति काम् जो छ मिनिष्टरले गर्छन् । मेरो दर्जा ठुलो छ भनि प्राइम मीनिष्टरले अनरीत् गर्न्या पारमेन्ट कौसलवाट सजाय हुंछ ।

कम्यांडर–इन–चिफले जंगी फौजको पजनि गर्नु । जंगी पल्टन्लाई मैन्हावारी—दर्माहा दिनु । षजाना, वन्दुक, वारुद, गोली, लडाईका हात–हतियार तयारि राषनु । जहा लडाइ पन्यो ताहा फौज पुऱ्याउनु । पल्टन्लाइ वस्न्या आड, गढि, कील्ला वनाउनु । तार, घाट, वाटो, सडक वनाउनु । फौजलाई रसद पुऱ्याउनु । पल्टन्लाई कवायत् सीकाउनु, अैन सुनाउनु, फौज राजि राषनु । अैनदेषि वढता रकम कलम् टंटा नलाउनु । रैयतका वारी–विरुवा, फलफुल केहि मालताल् लुटपीत् गर्न नदीनु । पजनि गर्दा वलिया अंगका, नीरोगि लायक्का, दिलका सुरा, अैनमा रहन्या यस्तालाई पल्टनमा जागीर दीनु । पल्टनमा पगरिको रोल वढाउदा पैले रोल जस्को छ उसलाई वढाउनु । सीपाहीको अमल्दार, अमल्दारको हुवल्दार, हुवल्दारको ज्मादार, ज्मादारको सुवेदार, सुवेदारको लेफ्टेन्, लेफ्टेन्को कपतान्, कपतान्को कर्णेल्, कर्णेल्को जर्णेल यस्ता रितसँग पजनि गर्नु । क्या अर्थले भन्या छोटा–वडाका वढौला भन्या उमेद रहंछ । काम गरि आउदा साह्रो हुन्छ । पक्षमा पजनि नगर्नु, लुला–लंगडा, काना–षोरंडा, उमेर नपुग्याका केटाकेटीलाई जागीर नदीनु । वीना टक्सीर कसैको जागीर नषो- सनु । वुढो भयो, रोगी भयो, पल्टन्को काम् गर्न सकेन् भन्या

इगौलस[1] दिनु । उस्को थान्गीमा अर्को भर्ति गर्नु । पल्टनमा घानगी थाली राषी आफुले नषानु । कहि लडाइ पर्दा वीना तजवीजले फौज गाफीलमा राषी नमराउनु । यती काममा १ काम चुक्या पनि कम्यांडर–इन–चिफलाई पारमीन्ट कौसलवाट सजाय व रेंजी हुंछ ।

## पार्लियामेराट

पारमेन्ट कौसल घर कस्तो छ भन्या ३ कर वर रुपैञा षच लाई वनायाको छ। हवेली, अैनाका छाना, अैनाका झ्याल लाग्याका, सुनका पानिले घर सिगारि चीत्रकार लेषीयाका; झाडवति, लालटेन्, फानस तह्–वितह्का लाग्याका छन् । मेच, कवज अंगा–जगामा वरावर लयन मीलाई राष्याका छन् । ताहा उच्चा ठाउमा वादसाह् गादि छ । त्यो गादिका दाहिना वाउ सपेत्भै दाह्री–जुगा फुल्याको वुढा–पुराना, भयंकर रूप लियाका अधिका लाठ, डुक, कम्यांडर–इन–चिफ, प्राइम मिनीष्टर, जणल्, कणल्, जज, कलक्टर, इलिम लियाका मुलकी साहेवानहरू—कसैको डर केही मान्दैनन्—देषदा पनि डर लागदा यस्ता तह्का मानिस हजार वाह् सये कुर्चि, मेच, तषता वस्या। यस्ता साभाका वीचमा वोलनाको मकदुर कसैको नहुन्या। जौन भगडीया छ, तेसलाई वोलाउदा भुठा कुरा गर्नाको त क्या मकदुर, साचो कुरा पुन्याउन पनि कष्ट– संदेह् हुन्या । यस्ता कचहरीका विचमा मुनासीवको वोलछ भनि पहिचान् भैरह्याका कसैले कहि वेमुनासीव गन्यो भन्या सजाय गर्न्या तयार छन् । सभामा गुलगफडा हुन

---

१. (?) अवकाश

पाउदैन् । यीटाले वोल्यो उस्को प्रतिउत्तर अर्कालि दिया । कुराको मुदा पुग्यो भन्या सवैले हो भनि सहि गन्या । कुराको मुदा पुगेन भन्या फलाफल गरि मुदा ठहराई अँनको कीताप् हेरि जवाव दीया। पारमेन्ट कौसलले कसैको वीरीत सहदैनन् । वादसाहाई वदलाई वदला गर्न सकछन् । वीरीत गन्या प्राइम मिनिष्टरलाइ पारेज गन सकछन् । विरित गन्या कन्यांडर-इन-चिफलाइ वदला गर्न सक-छन् । लाठ, डुक, जर्णेल अरू पगरिको त हीसापै छैन् । पल्टन्ले दंगा गन्या तेस पल्टन्लाई अरू पल्टन् लगाई तोपले उडाउछन् ।

यस्तो हुकुम् वलियो भयाको वोदाको दर्वार वन्याको यो अन वनायाको अधिका अंग्रेजका पुर्षाली जीज्यूवयासले[1] वनायाको अँन हो। दुनिआका थिती—झग्डा नगर्नु । अर्काको नीन्दा नगनु । अर्काको वीगार्नका पछि नलागनु । धनले, मानले, रूपले, वलले सानु छ भनी हेलाठट्टा नगनु । निर्धालाई दया गर्नु । वडालाई मान गनु । साँचो वोलनु; आफ्ना धनको सभार गर्नु । मैला कुरा नलाउनु । धोया सुकीलो हुंछ । वस्त्रा लाया भया पुगछ । आगमा मयल नराषनु । इश्वरले वनाइदियाको मुर्ती धोइ सफाई गरि राषनु र तेसलाई लक्षिमले दीनुपर्छ । आफ्ना घर भो, षेति भयो, आफ्ना घर नजिकको वाटो भयो, पानिघाट् नजिकको वारि भया, आफ्ना घर वरिपरि भयो फुलका वीरूवा, षान्या फलका वीरूवा लाइ-राषनु । वषतमा षेती गर्नु । गाइ, वाषा, भेडा, वीरालु, कुकुर, चराचुरंगी पाली राषनु । आफ्ना भरमा रह्याका अभागी, मुर्ष, फोहोर, नराम्रा भया पनि पढाउनु, सधाउनु, सिकाउनु, पीयारो गरि राषनु । षेति गर्नु । वेपार गर्नु । चाकरि गर्नु । जुन कुराले

---

१. जैमस काइस्ट (?)

आफ्नु जीववृत्ती हु छ सोही कुरा गर्नु । अर्काको जीउ नमान् अर्काको धनको लोभ नगर्नु । सोझो मन सोझो उद्यम गर्नु ।

राजाको थिति—दुनीआं सित वसीको दसवद महसुल लिनु । त्यो धन अनुसार फौज पल्टन् वनाउनु आड, कील्ला, छाउनी वनाउनु । फौजलाई षान-लाउन वेसगरि दीनु; राजी राषनु । सबैको आत्मा वरावर देषन । प्रजालाइ दुष नदिनु । चोर, ढाङ्, लुच्चा, अर्कालाई कुटन्या, अर्कालाई गाली गर्न्या, अर्काको इद्दा, इजत्, हुरमतसम्मको नीन्दा गर्न्यालाई झेलषानामा कयद गर्नु । षान-लाउनमा वेसगरि दी अैन मात्र सुनाउनु । काम जस-जसको जुन् वृटि छ सोही काम सीकाउनु, सधाउनु । मीयाद पुऱ्यापछि छाडि दिनु । फेरि पनि उसै गऱ्या कुटनु, सासना गर्नु, दोवर कयद गरि छोडीदिनु । ३ पल्ट वीराया वीराउ गर्न्यालाइ काला पानि पुऱ्याइदीनु । जीउ मार्न्यालाई वदला जो वै मार्नु । राजाले पनि अर्काको जीउ माऱ्या, अर्काको धनहऱ्या वीना तकसीर सासना गर्न लाग्या अैनमा रहि वेमनासीव गर्न लाग्या भन्या पारमेन्ट कौसल्‌वाट भारादार-फौज मीली त्यो राजालाई कयद गरि उसै राजाका वंसमा अर्को राजा थापना गर्नु । राजा, भारादार, दुनिआं फौज, पल्टन्, परचक्रि, मुसाफेर, अनाथ, अजान, दैवचक्र परिआयाको वीवेक् वीचार गरि कसैलाई पनि समझाउनु । सास्त्र सुनाउनु । राजनितिको अैन सुनाउनु, सीकाउनु, सधाउनु पढाउनु। यक पल्टको वीराउ माफ गर्नु दोस्रो वीराउमा डंड-सासना गर्नु । तेस्री वीराउ गऱ्यामा कालापानि पुऱ्याइदिनु । कंदमूल षाई सन्तोष ।

यो पारलमीन्ट कचहरि कन्तो हो भन्या धर्मसासत्र, नीति सासत्र, बुढाको चलनको सार भिकी बनायाको ऐन हो। यो ऐन कीताप ली पंचले धर्म सीरमा राखी कसैको मोहवत्तमा नपरी सोझो रस्ता ली नीसाव गर्नु र वडो पुन्य हुंछ। सात कुल तर्छ। स्वर्ग लोक्को भोग पाउछन्। त्यो सभामा वसि अन्याये वोल्यो भन्या लोभ–मोहमा परि अन्याय गन्या भन्या तेसलाई चंद्र–सुर्ज्ये उदाउंज्याल् पृथीवीमा रहंज्याल् तेसले नर्कमा यकदसा रहंछन् भनि तेही कीतापमा लेषीयाको छ। पारमेन्ट कौसल इश्वरको दर्वार वनायाको छ। अन्यायमा मर्न्या राजा–पर्जाको आधार भयाका सबैको फीराद गर्न्या ठाउ धर्मीलाई धर्मीद्वारा छ; पापी-लाई जमद्वार छ। वेलायतका आयुर्दा यहि पारमेन्ट कौसल रहेछ। जाहातक् पारमेन्ट कौसल्को थिती रहला तहातक् वेलायत् रहला। जाहा पारलमेन्ट कौसलको थिति नरहला ताहा लंडन्–वेलायेत् आफसैआफ डुवला भनि कीतावमा लेषीयाको छ।

यस पारलमेन्ट कौसल कचहरिमा वादसाह विकटुरियाले पनि आउनुपर्न्या थीती रहेछ। पारमेन्ट कचहरिमा आउदा अगाडी तुरुक् सवारको लयन, विचमा भारादारको ६ घोडा लायाको वगीका सवार, ताहापछि भाला वर्छा लायाका यक सय षास गोरा पुतलि जस्ता पोसाक् लायाका वादसाहका वगीका वारिपरि लाग्याका छन्। वादसाहका वगिमा षीन रंगका घोडा ८ लाग्याका थिया। अरू भारादारका वगीको हिसाव थियन। लाषौ वगीका सवार चल्याक थिया। वादसाहले पैह्र्याका गहना—हीरा जडाउ भयाका मुकुट् सिरमा लायाका, हीराका हार गहना लायाका, केयेनुर[1] हीरा छातिमा लायाका। सपेत रुपैला काम भयाका लहगा

1. कोहेनूर हिरा (?)

पैह्रयाका भारि गह्ना पोसाक् लगाई बगीमा सवारि चल्यो । कुइन-को सवारी हुदा लन्डन् सहरका मानिस् जो कोही सवारि हुन्या गल्लीमा दुइ कोससम्म ठेलमठेल गरि दुनीया रह्याका थिया । टोपी उतारी दर्सन गर्न्या वरेवरे - भनि जयेजय पुकारीन्या । कुइन रानि पनि सबैका मुषमुषमा हेरि दाहीना वाउ झ्यालझ्यालमा वस्न्या सबैलाई नजर दि सिर सबैलाई झुकाइ दीन्या । हस्याइल्या मुष गरि बडा सिलमा रह्याकी लछिमको औतार लियाको जस्ति रानि सव दुनिआले दर्सन पाउदा षुसि भै धंन्य हाम्रा वादसाहाको सिल् भंन्या । यस्तै तह्रसीत् सबै भारादार कौसलिया सबैलाइ षातीर गरि भनिन्—तीमीहरू वहुत निमक् हलाली छौ । काज काम गरेउ भनि षुसी भै अव ६ महिना तीमीहरू वहुत तह्रसंग आपना घरि वारसंग वसि आया भनि कीताव पढि सुनाईर वीदा दीइन् ॥

## महारानी भिक्टोरियासंग भेट

वादसाह वीक्टोरियासित पैल्हे मुलाकात हुदा वादसाहाका हजुरमा रह्याका प्राइम् मिनिष्टर कम्यांण्डर-इन-चिफ, लाठ, डुक्, कंपनी साहेव चेरमीन् ग्रीन् सालवट् यति मानिस साठमा थिया । यति मानिस साथमा ली कुइन् बैठक्मा षडा रहयाकी थिइ । तेही वषतमा नेपालका श्री प्राइम् मीनिष्टर साहेव उन्का भाई कर्णेलहरु, काजी, सर्दार, मुसाहेव साथमा ली गया र मुलाकात् भयो । नेपाल श्री ५ महाराजवाट पठायाको षरिता वादसाहाका हातमा दिनुभयो र षरिता हातमा ली सिर झुकाइन् । नेपालको षैर-मिजाद पुछिन् । चाहिन्या सम्मको वीस्तार गर्नु भयो । वाटामा

१. हुर्रे—हुर्रे !

आउदामा जहाज-समुद्रमा कसो भयो, खानपीनामा तकलीफ् भयो की भनि सोधीन् र हजुरका अक्वालले आनन्दसित आच्यौ भंनु भयो र खुसि भइन् । तीमीं आयौ, बढिया भयो, र सर्कारको यक-चित्त भयो, पछि परंटुसम्म प्रिति रह्यो, दोस्तिमा खलवल कैल्हे हवैन भनि खातीर गरिन् । नेपालका वजिर हुसियार रह्याछन्, देखनामा पनि वहुत होसियार रह्याछन् । देखनामा पनि, गहना-कपडा लायाको सुहायाको पनि, राम्रा जवान रह्याछन् भनि कुरा गऱ्या । अव इनलाई देराडंडा, साहेवसाहाको ताकीती गर्न होसि-यार मानिस राखी देउ; कौनैं कुराको तकलीफ् हुन नपावस भनि प्राइम् मीनीष्टरलाई हुकुम दिइन् । र कप्तान्, पुलिसका सिपाही नोकरि राखी दीया । पैंले मुलाकात्‌को वेहोरा यहि भयो ।

दोश्रा मुलाकातमा ज्यावद भारादार १५।१६ सये, उन्का मीस साहेव भारि गहना पोसाक लाई आयाका थीया । वादसाहा कुइन् सिंगासनमा आड लागी खडा रह्याकी थिइन् । तस्तै विचमा नेपा-लका श्री प्राइम मिनिष्टर साहेवहरु गया र कुइन्‌को सलाम् गऱ्या र कुइन्‌ले वडा आदरसित अगाडी नजिकैमा वस भनिन र नजिकैमा रह्याका थिया । ताहा रह्या भारादाराहरुले कुइन्‌को दर्सन यक यक गरि गर्न्या । कोहि टाढैवाट सलाम गर्दै जादै गऱ्या, कोही कुइन्‌का हातमा गुड्‌माने गर्न्या, कोही लेडीहरु हातमा गुडमाने गरि कुइनका गालामा चुम्वन गरि जान्या । अघिवाट कुइनको दर्सन गर्न्या; पछिवाट प्रिनसालवटको सलाम गर्न्या । वाहाको प्राइम् मिनिष्टरले नेपालका श्री प्राइम् मीनिष्टर साहेवलाई येक येक गरि यो भारादार यो हो, यसलाई काम् यो छ भनि यो फलाना साहेव-को लेडि हो, यसको कुइन्‌सित यो नाता छ भनि चिन्हाइ

दिथ्या । यस्तै रितसित भारादार लेडिहरुले कुइनको दर्सन गरि गया । यो तमासा नेपालका मुक्तियार जङ्गबहादुर कुवर राणाजी-लाई देषाया । ती भारादार लेडिहरुले पनि वडो षातीर गर्‍या भन्या संक्षेप येसमा गयो ॥ ॥

फेरि तेश्रो मुलाकातमा जाति वेलायत् सहर भरका भारादार, लेडीहरुलाई नेपालका वजिरलाई कुइन्ले निमटो गरिन् । चार घडि रात जादा सब भारादार लेडीहरु सामेल भया । त्यो दर्वार-का वैठक कस्तो थीयो भन्या बयान गरि सक्नु छैन । दुइ सय हात लमवा, पचास हात चाकलो गज भयाको भारि गलैचा विछायाको चारै तर्फ अैना लाग्याको । तसवीर लयन लाग्याको छ । रंग रंग-का झाड़वतिले झलावर भयाको । लालटेन्, पानस, भैंझाड, ग्यास-वतिले सर्वत्र उज्यालो भयाको । जात-जातका फुल झ्याल-झ्यालमा टिपीलमा राष्याका छन् । अत्तरका पुतराईले वहुत सुगंध चल्या-को छ । सुनका गीलतिले चीत्रकार भऱ्याको । सुन-चादिका भाडाले जग जगायमान भयाको । यस्ता वैठकमा ज्यावद भारादार लालटोप, कुर्थि, पुतली टोप लाई हजार वाह्र सय गोरा साहेवान्हरू वस्याका छन् । हीरा, पन्ना, मानिक, मोतीका गहना पैह्रि भारि गहना-पोसाक लायाका मानु इन्द्रका अपसरा जस्ता लेडीहरू हजार-वाह्र सय आइ साहेवान् र लेडीहरू पीचो भै वस्याका छन् । पात्साही वाजा वजन लाग्याको छ ।

नेपालका श्री प्राइम् मिनिष्टर साहेव उन्का भाइ कर्णैल, काजी सर्दार, कप्तान्, लफ्टेन्हरु पनि गयाका थिया । वादसाहवाट श्री मिनिष्टरलाई डाकीन् र केहि मेवाहरु षान्छौ की भनि सोधीन

र बादसाहा अगाडी हामीले पान हाम्रा रितले बेमुनासिव हुंछ भनि श्री मिनिष्टर सहिवले भन्दामा हासिकन् कुर्सिमा बस भनिन् र कुर्सिमा बस्या। ताहा बराबर नाच-तमासा हुन लाग्य को थियो। सब लेडीहरु, साहवानहरु नाचदथ्या। थोरा बेरमा आफै कुइन्, साहेबानहरूसित बराबर नाचन लाग्यी मैंले नाच्याको नेपालका मीनीष्टर साहेवले राम्रो मान्या की मानेनन् भनि आपस्मा कुरा गर्दै नाचदै, हासदै गरिन्। साहेबान्हरू, लेडीहरू कोही नाचदछन् कोही हिडिरहंछन्। कोहि वसिरह्याका छन। ताहा छोटा-वडा कोही नमांन्या, वेप्रभापसित रहन्या। यस्तो तमासा भयो।

यक दिन अपसरा जस्ता परिको नाच हेर्न कुइनले मीनिष्टर साहेबलाइ डाकन पठाइन र पाउ लागनु भयो। ताहा परिको नाच हुनलाग्याका थियो। ति परि कस्ता ठिया भन्या तिन्का रूपको, नाचको बयान् गर्न सकदैंन। इन्द्रका अपसरा कामकन्दला, उरवसिको नाच, गाउना, रूपको बयान् गर्न सहस्र जिभ्रा भयाको सेसलै पनि सकदैनन् भनि कोही कथाहामा सुनींछ तस्तै तमासा भयो। तेही बीचमा कुइनले, मिनिष्टर साहेबलाइ यो नाच राम्रो लाग्यो की भनि सोधीन् र बहुत राम्रो लाग्यो भनि मर्जि भयो। फेरि गीदको अर्थ बुझदछौ की भन्दा गिदका अर्थ ता बुझदिन् जस्तै बुलबुल चिडही बोल्दामा मानिसहरू राम्रो मानी सुन्छन् तस्तै राम्रो सुनीन्छ भनि मर्जि हुदा षुस भइन। बहुत होसियार रह्याछन् भनि आपसमा भनिन्॥ ॥

# सबैंत ठूलो स्वागत

एक दीन लमडिको अपसराको नाच हेर्न जाउ भनि मीनीष्टर साहेब, कर्णल् २ भाई, काजि, सर्दार, बडे कप्तान्, लेफ्टेन, सुवाहरू सबै गया । नाच हेर्न्या ठाउमा जादा क्या तमासा देषीयो भन्या सात तला अगलो भयाको चौघरा हवेलीका बिचमा दाष–चोक जस्तो चोक्मा ताहा कुर्सि, तषता, बिछ्याउनामा लोगने स्वास्नी गरी ज्मा चार हजारको अंदाजी मानीस् जनही यक मोहर तिरि नाच हेर्न भनि सहरका भला मानिस् आयाका थिया । ति चौघरा हवेलीमा पतला भंना लाग्याका झ्याल ८०।९० छन् । ती झ्याल–झ्यालमा भारादार, साहेबानहरू उन्का स्वास्नि, छोरी, बुहारिहरू भारि गहना, पोसाक् लाई झ्याल–झ्यालमा वस्याका थिया । येक पंडका झ्यालमा नेपालका श्री मीनिष्टर साहेब वस्याका थिया । मिनिष्टर साहेबलाई नाच हेर्न आयाका भारादार दूनिञा सबैल टोपी झिकी सलाम् गर्न्या । गहना–पोसाक् लायाको देषदा सबैले वडो षुसि भै तमासा हेर्‍या । वडा षातीर गर्‍या । तेसै विचमा बादसाही बाजा बजन लाग्याको थीयो । ताहा इंद्रजाली तमासा हुन लाग्याको थीयो । कैल्हे सुर्य उदाउन्या वेहान क दल्का घाम्, दोपहरको घाम्. वेलुकाको घाम् अस्ताइ साज भै अध्यारो हुन्या । फेरि चंद्रमा उदाइ तारा लाग्न्या । बादल भै बिजुली चम्कन्या । कलका जोरले हाषको गर्मि पनि गराउन्या । कैल्हे समुद्रमा जाहाज चल्याका देषीन्या । कैल्हे वडे सहर देषाउन्या । कैल्हे वडे वींद्रावन देषाउन्या । कैल्हे वडावडा फौजले लडाञी गर्न्याको, बुनेपाटले ५० लाष फौज लि ९ तोपको मुलुक मार्दै रूसका हीउ, माटो, पाहाडमा फौजले चढाइ गर्न्याको देषिन्या । यस्तै तह्रसितको

तमासामा दुनीयाहरू ताजुब् मानी भुलीरह्याका थिया । अकस-मात्‌मा ३०।४० वरिपरि इंद्रका अपसरा जस्ता आई खडा हुदा वडो आसर्य्य भयो । क्या ऊर्थ भन्या उनको रूप, पोसाक देषदा १५।१६ वर्षका उमेर, पुतलि उड्दा झैं नाचको तह्‌ल-वितह्‌ल देषदा सबैंलाई मोह गरायो । तेस नाचका रिझमा १५ सये रुपैंया श्री मीनीष्टर साहेववाट् इनाम् वकस्नुभयो । तेस नाचलाई उमराउहरूले इनाम दीयाको १ मैन्हाको जमा रुपैंया तिन लाष हुदोरहेछ । यस्ता सोषिन् मानिस् वेलायत्‌मा रह्य छन् । सो नाचको थुल्लाई डेढ लाषको दर्माहा रहेछ । नाचनेहरूलाई याह्‌ल हजार रहेछ सर्कारको षर्च ।

यक दीन् वेलायत् सहरदेषी दर्षीनतर्फ सहर वहीर येक वगसाल रहेछ । ताहाका वडा साहेवले श्री मिनिष्टर साहेवलाई निमोता गर्‍या । मेरा वगसालेको तमासा हेंर्दीनु भया वढिया होला भनि सानु धुवा जाहाज लि लीन फौज आया र जानुभयो । त्यो जाहाज सवारि मैं जादा अरू सहरवासि लेडि-मिसिहरू साहेवानहरूका जाहाज साथ लाग्याका हजार-याह्‌ल सय थिया । तोमस नदि वारिपरि घर हुन्या दुनियाले घरही ताना तोपको सलामी दिया । सबैंले टोपी उटारि सलामी दीया । जस्तो बादसाह्‌ वीक्टोरियाको सवारि हुदा धाक-रवाफ दुनिआंलाई हुंथ्यो । वहांदेषी पनि नया मानिस् भनि ठुलो रवाफ भयो । वगसालमा पुग्दा टोपको सलामी भयो । ताहा लाषौ मानिस्‌को भिड् थियो । त्यो वगसाल कस्तो थियो भन्या सात तला भयाको चौघरा हवेली, *४ छुटा हवेली, पाच वघैचा, २ कोस गिर्दा भयाको वडो सोभा

मयाको चीत्रकारमा लेष्याको जस्ता सडक, समान् विद्रावनका लता-झपक्याका गाढा वगैचा । ताहा कोही जगामा घोडा चढन्या थला वन्याका छन । ताहा १५।२० घोडा कसि तयार गरि राष्याका छन् । कहिं वन्दुक् हान्या थला वन्याका छन् । वन्दुक्, पेस्तवल भरी राष्याका छन् । कहिं धना हांन्य थला वन्याका छन । ताहीं वनायाको छ । भोलटा तयारि राष्याका छन । कहि गतका-फरि तयार छन् । कहिं पहलमान् लडन लाग्याका छन् । कहिं अपसरा जस्ता परि डोरिमा नाचन लाग्याका छन् । कहिं इन्द्रजाली तमासा हुन लाग्याको छ । काहीं वादसाही वाजा वजन लाग्याको छ । काहीं गोवारा उडन लाग्याको छ काहीं आतसवाजीको तमासा हुन् लाग्याकोछ । ग्यास वती, मैन वतीको तमासा घरमा झारवत्ति भझाड, लालटिन्, देवालगीरीको झला वर छ । वगैचामा रूपका हांगा-हांगा पीछे वत्तिझंदा लटक्याका छन् । रोसनीको वयान् गरिसक्नु छैन् । षान्या सराजामका हट्-दोकान् मजवुत् छ । उमराउहरू जान्छन् । लाग्याको पैसातीन्या; कोही घोडा चढछन् । कोही वन्दुक् हानछन् । कोही धना हान्छन् । कोही हुतुकाहात षेल्छन् । कोही नाचदछन् । कोही वजाउदछन् । यस्तै रितले रात-दिन् सदासर्वदा तैंस ठाउमा षुसिमा रहंछन् ।

मुन[1], वन्धुक् हांन्या थलामा श्री प्राइम् मिनिष्टर साहिवबाट हान्नुभयो र चोट नविरिदा सबै लोकले ताजुब मान्या । जौन तमासा हेर्न जानुहुथ्यो लस्करले वेह्नि रापन्या । नेपालका प्राइम् मिनिष्टर देषनामा षुवसुरथ; गहना पोसाक् अति सुहायाको; घोडा चढन, वन्दूक हांन, धाना हांन वाकीफ् रह्याछन् वोलचालमा

---

१. मनु ( ? )    २. ( ? )

बहुत होसियारी रह्याछन् । बषत्‌को बुधि ईश्वरले दीयाको रहेछ । यस्ता मानिस् मुलुक्‌मा पैदा हुन्या रह्याछन् भनि आपसमा कुरा गरि बडो तारिव गर्न्या । असल्–असल् षफ्‌सुरत् लाषा रुपैयाको त बर पोसाक् लायाका लाठ, डूक साहेवका लेडी–मिसिहरू अत्ति सुन्दरि अघि सरि श्री मिनिष्टर साहेबका गहना, कपडा छामदै–हेर्दै गर्न्या । दोभास्या कुरा जान्या मानिस् षोजी ल्यायर बराबर कुरा गर्न्या । हातमा चुंमन गर्न्या । कुरा गर्दै आषा, मुष रसिलो गर्दै मुषमा लाली चढाई निधारमा पसिना काटि आग फुराई कुरा गर्दा गर्दै आसक् भै लाचार हुन्या । अब अबेर भयो डेरामा जाउं भनि जान लागदा जल्दी हातमा समाती अलि षेलम् भनि बसाउन्या । वडो षातिर गर्न्या । अब नेपाल कहिले जानुहुंछ भनि सोधन्या । अब चाडो जान्छौं भन्दा कीन चाडो जानुहुंछ; सक्या सधैं यही वसनु नसक्या दस वर्ष वसनु, नभया यक वर्ष ता वसन्या हो भनि वडो षातीर गर्न्या । वरू नआयाको भया हुंथ्यो, अब जान्छौं भन्दा हामीलाई मुटुमा तिर हान्या जस्तो लागछ भनि अध्यारो मुष लाउन्या । तपाइ गया पनि तपाइको यक तसवीर छोडी गया सधैं तसवीर हेरि मनमा समझना राषौंला । हामीलाई तपाइ पुग्नु भया पछि घर पुग्यौं भंन्या चिठि पठाइदीनुभया हामीलाई संतोष होला भनि गहभरि आसु गरि मुटुमा गाठो पारि वोलन पनि नसक्न्या । यस्तो षातीर गर्न्या ताहांको मानीस्‌को बयान् गर्न सक्जमा कोही छैनन् । सहस्र जिभ्रा भयाकाले पनि सकन्या छैन् ॥ ॥

## लण्डन बाहिर पनि

यक दिन वेलायेत् सहरदेषी पश्चिमतर्फ समुद्रका तीरमा यक पिंगला[१] भन्याको सहर, किल्ला, छाउनी अत्ति सुन्दर वडो मजकुत

१. ( ? )

अती रमाईलो जगा लंडन सहरदेखी पाचसय कोसमा रहेछ। ताहाका मानिस् बहुत राम्रा मीजायस् भयाका। चीजबीज फलफुल सागरि तर्कारि अनि मेवाले भरिपुर्न भयाको जगा रहेछ। ताहा श्री प्राइम् मीनीष्टर साहेब रेलमा सवारि भै एक दीन्‌मा पुग्नु भयो। ताहा चार पल्टन् बस्याको रहेछ। ताहा मालीक् लाठ साहेब रह्याछन्। ती लाठ साहेबले आइ भेट-मुलाकात गर्‍या। १९ तोपको सलामी दीया। डेराडंडा मेजमानी सबै कुराको बहुत खातिर गर्‍या। ताहाका विच सहरमा नाच-तमासा हुन लाग्याको थियो। नाच हेर्न जाउ भनि भन्या र नाचमा पुग्नुभयो। ताहा लाषौ मानिस्‌को भीड थीयो। ती लोकहरूले श्री प्राइम् मीनीष्टर साहेबलाइ सबैले टोपी उतारि सलाम् गर्‍या। वरेवरे भनि जयजयकार गर्‍या। नाच-तमासा नजर भयो।

ताहा समुद्रका तिरमा वडावडा जाहाज धुवाकस् बन लाग्याको थियो। १ जहाजमा सये तोप मञ्च भयाको, सय जवानको छाउनी भयाको, ५।६ तली भयाको यस्ता लडाईको जाहाज बन्न लाग्याको थियो। ५०।६० थिया। कसैले गरि आरन चल्याका छन; कसैले दौरि वाटछन; कसैले मरंत गर्दछन। कल्‌ले काम गर्दा राम्रो पनि, वलियो पनि, चाडो पनि हुदो रहेछ।

ताहादेखी २५० कोसमा एक व्रमदिहाम[2] भन्याको सहर छ। ताहाको काम् ज्यादत धातु, कलाम, काच ढलन्या। तोप, वन्धुक् गोला, गोली, हातहतियार, भाडा-वर्तन, ऐना, झाडवति, फानस् देवालगीरि, धातुका तसवीर ताहा बन्दा रह्याछन्। ताहा कलाम्

१. (?) २. वर्मिङ्घाम (?)

थानी, सिसा थानी, पथरका गोल थानी, अरू धातुका थानी ताही रहेछन् । समराइलिन्ड टापुमा ताहीवाट सर्वत्र मुलुक्मा जांछन् । त्यो सहरं कालीगढहरू मात्र वस्याका छन् । १०।१२ हजार काली-गढका घर छन् । ताहा गंगासागरमा रावनलाई तावाको १ धईंरा वन्न लाग्यको थीया । १०।१२ हात लंबा-चौडा भयाको अंना ढालन लाग्याका थिया । धातुको भाडामा मोलंवाको काम् ताही हुदोरहेछ । ताहाका रंतान् दौलथदार छन् । वहुत रमनिय छ । रोजी हुनाले वडो गुलजार छ ।

## मनोरञ्जनका साधनहरू

लन्दन सहरको रोजरोजको तमासा—कोही जगामा रेसमी कपडाका वडा-वडा गोवरा घर वनायाको छन । ती गोवरामा कलले धुवां हावा भरेर तेस गोवरामा १४ मानीस्, १ घोडा सवार समेत वस्याका छन् । ती गोवराका आसनमा डुंगा, वहाना समेत उडी आकासतर्फ गयो । घर जत्रो गोवरा उडाउदा जति आकासतर्फ गयो भन सानु हुदा लघुभिघूको यक फुल जत्रो देषींथ्यो । ताहादेषी पच्यो । देषीन छोड्यो । कैल्हे २ सय कोस्का जमीन् वसछ । कैल्हे ५ सय कोसमा वसछ । कैल्हे समुद्रमा वसन गयो भन्या तेही डुंगामा मानीस् चढि वहनाले डुंगा पौराई उत्री रेलगाडामा सवार भै आउछन् । त्यो गोवरामा चढन्या मानीस्लाइ तमासा हेर्न जान्या मानीसले यकयक मोहर दिदा १४।१५ हजार रुपैया पाउदछन् । काही आतसवाजीको तमासा हुन लाग्याको छ । काही लडाईको नाच-तमासा हुन लाग्याको छ । काहि पहल्मान लडन लाग्याको छन् । काही घोडाको नाच-तमासा [illegible] सवार

भै प च हतियारवाली लडाई गर्न लाग्याका छन । ५ वर्षका कन्या-केटिहरू नाची घोडाका पीठमा चढि १ गोडाले टेकी नाचदछन् घोडा बराबर दौडछन । काही रात्रीमा हेर्न आउन्य हरूले मकु रा लाई नाचघरमा गै तमासा हेर्छन् । कसैलाई कोही चिन्दैनन । काहि घोडदौड हुन्लाग्याको छ । ६०।७० हजारको हारजित हुन्छ। त्यो घोडाडौड भरन जान्या मानीसहरू २।३ लाप मानीसको भीडभाड हुंछ । लाषौ वगीका सवार हुंछन् । कोही तिमस नदिमा जहाजको दौड लाग्याको छ । ३।४ हजार रुपैञाको हार-जित हुंछ। काही तसवीरको तमासा छ। काही नञा हीकमतको तमासा छ। वडा-वडा कालिगढ गै तजवीज गर्छन् । कोही जगामा वाह्र वेलायेत् तापू हिन्दूस्थानका जलथलका जना वर पशु-पंछि पाल्याका छन् । ती जना वर हेर्न हजारो मानिस्का भीड लाग्याका छन । ती जना वर हेर्न वडा-वडा लाठ्, लेडी साहेव, मिम, मीसी साहिवहरू भारि गहना-पोसाक लाई आयाका छन् । कोही तिमस नदिका यक् घाटमा रस्ता षोली वारपार गर्दछन । रस्तादेषी माथी नदि वहन्छन् । जाहाज १०।१२ हजार चल्याका छन् । भित्र रस्ता षोली दोहरा वजार लाग्याका छन् ।

तेस पुलको हीकमत् क्या हो भन्या तावाको ढुंग्रो घर जस्तो वारपार छिचोलियाको वमालुम् गरायाको सवैलाई आसर्य हुंछ। ताहा ग्यासवतिको उज्यालो आठौ प्रहर वल्याकै छ । भीत्र दोहरा सडकमा हाट-दोकान् लाग्याको छ । जो चिज षोज्यो सो चीज मिलछ । देस-देसवाट त्यो पुल हेर्न आउनछन् । हेर्छन् आसर्य मान्छन् । त्यो सहरमा कहि नाच-तमासा, कहि गोवरा उदायाके वम सार्छ कहि अरू मुलकका पशु-पंछि, अनोठा हीकमतक

चीजवीज, तसवीर, कीताव, रूष-वृक्ष, जलका-थलका जना वर पाली राष्याका छन् । त्यो हेर्न देसका मुसाफेरहरू कोइ वगि चढी, कोही घोडा चढी, कोही पैदल हिडी तमासा हेर्न आउछन् । तेस मुलुकका मानीस् सदा षुसिमा रहंछन् । काही रोयाको, हुल दंगा झगडा गन्याको, कुट्पीट्, गाली-सराप्, अर्काको नीन्दा गर्द नन् । सदा षुसिमा रह्याका छन् । कौनै कुराको वदि छैन् ।

## व्यापार र शिक्षा

लंडन् सहरको सदावर्तको वेहोरा — वडा वडा दौलथदार भारादार, महाजन् ४०।५० गुमास्ता मिलि आफ्ना सष्य अनुसार कसैले करवर रुपैया, कसैले लाष रुपैञा, ससैले हजार रुपैया आफ्ना चित्तले सक्यासम्म धन संकल्प गरिदीया । रुपैया जमा गन्या । तेस धनमा वडा-वडा इमानदार मानीसलाई मालीक गराया । त्यो धन वेपार गर्ने व्याजमा सौदागरलाई दीया । व्याज्ले चौघरा घर वनाया । यक कोसको गिर्दा भयाको, भीत्र भीत्र चोकमा पानीका नहर, तलाउ वन्याका छन् । जाहाज राष्याका छन् । कहि धोवीघाट् वन्याका छन् । कहि पढाउन्या इस्कुल घर वन्याका छन् । कहि ढुंगाको काम् । कहि कपडाको काम । काही छालाको काम् । कही जडाउको काम । जौन-जौन मानीस्का वृत्ती छ तउन्-तउन् कामका वलीयाहरूलाई दर्मांहा दी राष्याका छन् । तेस जगामा ५ वर्षदेषि उभो २० वर्षदेषि उधोका केटाकेटीहरू इलम् सीक्न नआया, तेस घरभीत्र पस्या, नाउं लेषाया । जौन काम सीक्न इरादा गर्छन् तउन् कामका वलिपासीत लाइदिया । इलम् सीकछन्; सिकाउछन् । कोही जाहाजका काम सीकछन् । कोही पढछन् । कोही छालाको काम सीकछन् । कोही

ढुंगाको काम सीकछन् । काठको काम्, तावा, पितल, ढलवट्, कलाम्, सुन, चादी, जडाउ, कपडा स्यून, वत्तु धुन सीकछन् । कोही क वायत्का कीताप् पढ्छन् । आफ्ना-आफ्ना काममा डुवी काम सीकछन् । तेस लाई षान-लाउन् तेसै सदावर्तबाट दिनछन् । यस्ता केटाकीटी यक अडामा चार-पाच हजार छन । यस्ता अडा सहरभरमा ३०।४० अडा छन् । ५ वर्षदेषी २० वर्ष नहुंज्याल ताही वसि काम सिकछन् । घर जान कोही पाउनदैनन् । २० वर्ष भयापछि जुन कामको मानीस् छ उस कामको जागीरमा भर्ना गरिदींछन् । जागीर षानदिन भन्यालाई आफ्ना घर जा भनि बीदा दींछन् ।

## बिदाई

१९०७ साल भाद्र महीनाका दीन ६ जादा ईंलैंड वेलायत्का वादसाहि विक्टोरिया ताहाका प्राइम मिनीष्टर र कम्यांडर-इन-चिफ डुक वेलंड प्रिनसालबट ओ लाठ डुक, कंपनि तेस वेलायेत् सहरका वडा साहेवानहरू सबै नेपालका प्राइम् मीनीष्टर साहेवलाई डाको वडो पातिर गर्‍या । हजुर हाम्रा वीलायेत्मा हामीसीत भेट् मुलाकात् गर्न आउनुभयो । सबै कुरा वढिया भयो । क्या अर्थ भन्या मुतावर गोर्षा राजका मुल्की वजिर लंडन् वलायेत्मा आया भन्या वाह्र वेलायत्मा अव षवर पुग्यो । सबले वडो बयान गर्‍या । वडा बोल भयाका उमेदवार वडा मन्त्रि रह्याछन् भनि, यो सफर हुनाले वडो फाइदा हुन्या छ भन्छन् । आहा आउनाले दुवै सर्कारको दोस्ती रह्यो । दुवै तर्फका भारादार, फौज-पल्टन्, दुनीया रयायेत् महाजन सबैलाई वढिया भयो । अव ज्यास्त दोस्तमा ... बोल्दैछन् भनि बादसाह वडा साहेवानहरूको भन्या ...

तपाईहरूलाई आदाम वाटामा सवारीलाई घोडा, वगी, मीयाना, पालकी, जहाज र षानाखर्च नोकर-चाकर, चीज-वस्तु जो चाहीन्या सराजाम् हाम्रा जगा-जगाका भारादारले ताकीती गर्न्याछन् । कोनै कुराको तकलिफ् हुन्या छैन । गोर्षाका सिवाना-सम्म पुऱ्याई दीन्या छन् । गोर्षा दर्वारमा पुग्यापछि वाटाघाटाको षवर, तपाओंको पहुचनामाको षवर पठाइदीया हामीलाई वडो संतोष हुन्या छ भनी वडो खातीर गऱ्या । ताहाको जो चाहियाको चीज ली वीदा भै फ्रान्सीस् वादसाहाका मुलुकतीर रैलगाडामा सवार भै र,वाना हुनुभयो ।

# फिर्ती

## फ्रान्समा स्वागत

ताहादेषी दुइ सय कोस् फ्रान्सीस्को प्यारिस सहर पात्साहाका तषत छ। विचमा ४० कोसको समुद्र तर्नु पर्छ। वेलायेत्देषी १ प्रहर दिन बाकीमा रेलगाडामा स्वार भै जादा समुद्रका तिरमा साजमा पुग्नुभयो। तेही वषतमा धुवा कसको जाहाजमा स्वार भै जाहाज चल्दा सबैलाई रिगता लागन्या, वांत हुन्या, जाहाजमा उभी वस्न नहुन्या, घोप्टो परि सुतनु पर्न्या। केइ अर्थले भन्या त्यो समुद्रमा भवरी पर्‍याको छ। त्यो भवरीको छाल-लहरिले जोर गर्दा जाहाजलाई उतार-चढाई गर्दा वडो कठीन हुदो रहेछ। तीन प्रहर रात समुद्रका तिरमा पुग्नुभयो र होटलघरमा सुकाला गर्नुभयो। विहान् रेलगाडामा स्वार भै यक प्रहर दीन चढ्दा प्यारिस सहरमा पुग्नुभयो। ताहा उप्रान्त ताहा आज गोर्षाका श्री प्राइम मीनीष्टर कम्याण्डर-इन-चिफ जनरल जङ्गवाहादुर राणाजी याहा आउनु हुन्छ भनि ताहाका छोटा-वडा मानिस स्वा लाष आदमी भीडा थीयो। सबैले गुड्मानै सलाम गर्‍या। वडा साहेवहरू आइ षयर-भीज्याद पुछ्या। सर्कारवाट् डेरालाई असल प्यारिस सहरको नामुद घर षटायाको छ। ताहा जाफत भारी सराजाम् तयार् गरि राष्याको रहेछ। ताहाका प्राइम् मिनिष्टरले डेरामा पुर्‍याई मेजमानी चढाया। वडो षातीर-मुलाकाट गर्‍या।

पुक्याको भोलीपल्ट ताहाको प्राइम मीनीष्टर आया र बगीमा सवारि गराई प्यारिस् सहर्को दर्बार बाहिर-भीत्र, भंडारखाल, बाग-बगैचा, नहर-तलाउ, चहवच्चा[1] तसवीर जगा जगाका नाच-तमासा, गढीका कील्ला, सहर, हाति-घोडा, देस-देसका अनौठा पसु पंछी, गृजाघर सबै देषाया। ताहाका महाजन्, कालीगढले अनौठा चिज ली आया। नजर गराया। लाष-डेढ लाषको माल-असबाब् षरिद गर्नु भयो।

तेस वषत्मा ताहाका बादसाहा पश्चिम् दिसातिर हावा षान गयाका रह्याछन्। ६।७ दिनमा आईपुग्या र भोलीपल्ट दर्बारमा डाकन पठाया र नेपालका श्री प्राइम् मिनिष्टर साहेब पाउ लाग्नु भयो। ताहाका बादसाहा बैठकमा बस्याका रह्याछन् र उठेर ढोकासम्म लिन आया। हातमा समाती गुड्माने सलाम भयो। बाटाघाटाको षैराफियत् पुछ्या। सब बिस्तार गर्नु भयो। हिन्दुस्थानमा अंग्रेजसित गोर्षा महाराजको सित्राना जोगियाको छ भन्या सुनिन्थ्यो। आज दैव संजोगले भेट-मुलाकात् भयो भनी बहुत् षातीर गर्‍या। अब तपाञीलाई के चाहिंछ, केही चीज लिनाको र केही नाच-तमासा, गढी-कील्ला, फौज-पल्टन् ऐन-किताप, षजाना, हाम्रा मुलुकमा भयाको, तपाञीलाई चाहिन्ये कुरो ई मेरा भाई प्राइम् मीनिष्टरलाई भन्नु र सबै कुरा महजुत् गर्न्याछन् भनि सामनेमा अह्राया। बडो षातिर-मुलाषात् गर्‍या।

ताहा छ लाष फौज-पल्टन् रहेछ। ताहाका बादसाहाका फौज-पल्टन् दुनीञादारलाई टंटा लाउदा रिपब्लीक्[2] गरि बादसाहालाइ थपाई बुनेपाट पर्सिडंटलाई थप्या छन्। ती पर्सिडं-

---

१. ( ? )  २. रिपब्लिक्-गणतन्त्र।

टले दुनीआ, फौज–पल्टन्लाइ थिति–बन्दोवस्त गरि राजी गराई राष्याको छ। जगा–जगामा नाच–तमासा हुंछ । पसिइटलाई सबै षलक्ले जय जय मनाउछन् । त्यो सहरमा भारि–भारि साहुकार वस्याका छन् । ती सहरवासी बहुतै दौलथदार छन् । सारा सहर पक्कि हवेली, अँनाका झ्याल, अँनाका छाना, नाना तह्नका तसवीर लाग्याका छन् । झाडवत्तिको झला वर पारिराष्याको, सुन–चादीका भाडा भयो अथवा मोलंबा लाउनु भयो, घग्गा चीत्रकार गर्नु भयो, सुन–चादीका तार झीकनु भयो लयस गुछली बनाउ यति काम मात्रै सुन–चादीको चलन छ। गहना सुन–चादीको कोही लाउदैनन् । पोसाक भन्या जनानाहरू सटनका लहगा उनका रूमाल वढ्याका, मोजा–पंजा, सेतो तोप सीरमा, गोडामा जुता छोट–वडा सबैलाई यस्तै रितले लाउछन् । मर्दना पोसाक् काला वनात्को तोप्, कुर्थी, चुस्ता टोप, पंजा–मोजा, गलेवन्द एक रकम्का सबैले लाउछन् । जात वीसेष आफ्ना–आफ्ना रकम्मा सबै डव्याका छन् ।

पृथीवीका पिटमा कालीगढ, अकलवन्द फ्रान्सीसको वरोवर कोनै मुलुकमा छैनन् । क्या अर्थ भन्या तोप, वन्दूक्, षजाना वनायाको अघि ताही रहेछ। जात–जातका छित छिपन्या, वनात् वनाउन्या, जाहाज वनाउन्या, पालाक् वनाउन्या, रेलगाडा वनाउन्या, घडि वनाउन्या । तसवीर, झाड्वत्ति, फानस, देवालगीरि वडे–वडे अँना, जात–जातका काचका भाडा अघि अजमायस गरि वनायाको फ्रान्सीसमा रहेछ । पछि ताहाको नकल सिकी अरू मुलुक्मा वन्दोरहेछ । मुल गल्लि सय हातका चौडा । अरू

गल्लि ढुंगाले छाप्याको । सडक्का किनारामा वडे-वडे दरपतले छाआ गन्याको । ति सडक् वीचमा लाषौ वगीका स्वार धल्याका छन् । गल्लिमा नाल, कसिंगर, हिलो, धुलो देषनु काही छैन । सहरको वीचमा वडेवडे वघैचा । ति वघैचामा जात-जातका रंग-वीरंगका फुलले अति सोभायमान् भयाको । देस-देसका चराचुरंगी, मृग जात, भालु, वाघ, वानर, वनघोडा, गैंडा, भैंसी, भेडा, वाषा अनेक जातका जनावर, फलफुल, रूष-वृक्षले भरिपुर्ण भयाको । वगैंचामा चीत्रकारले लेख्याको जस्ता सडक् वन्याका छन् । ताहा षान्याचिज रोटी, मासु, सरापका दोकान लाग्याका छन् । त्यासवत्ति वगैंचा, सहर, चोक, पटागीनी, गल्लि, झ्याल-झ्यालमा चंद्र जोति जस्तो तेज भयाको दिपमालीका गन्या भैं सदा-सर्वदा रोसनि भरराात जल्याकै छ । ती वगैंचामा जव रात पन्यो सहर वाहीर ज्वान्-ज्वान् लोग्न्या-स्वास्निहरू आयाका र नाच-तमासा गन्या । रोटि, मासु, सराप षरिद गरि षाया । हासष्याल-ठटा गरि वडा षुसिमा रहन्या । कोही घोडा चढन सिकछन् । कोही वन्दुक, तारा हानछन् । यस्तै रितले दिनरात वडा षुसिमा रहंछन् । फौज-पल्टन् भन्या सहर वाहीर चारैतर्फ गढि-कील्ला वडे-वडे छाउनी वनाई ५।६ कोसमा रह्याका छन् । यस्ता तह्रको प्यारिस नगरि देषदा कैलास होकी भन्या जस्तो लागछन् । यस्ता प्यारिस नगर छ ।

वुनेप्राटले नौ टोपी मारि ल्यायाका तोप-गोली सहरका वीचमा वडे धरहरा वनाको रहेछ । तेस धरहरामा चढि हेर्दा मानु इंद्रासन् जस्तो सहरको तमासा देषाया । जगा-जगामा हावी

षाना निमित्त बनायाको दर्वारमा लगि ऐस्वर्यले [illegible] भयाको दर्वारका बैठकमा बिछ्याउना, मेच, कवज जगा–जगामा [illegible] को छ झाडवत्ति, ऐना, तसवीर, सुना–चादीका भाडा नाना तह्रका फुलदानले जगजगायमान भयाको इथालवाट् हेर्दा यस्ता वडे–वडे तलाऊ । ताहाको फोहराको समासात भये हातसम्म उडछ । यकतर्फ वडे वगचा विन्द्रावनको लता भयास्याका अति गाढा छापियाको । जगा–जगामा यस्ता तह्रका हवेली हेर्न वन्याका छन् । भारादारहरू आफ्ना काममा वहुत जीउ लाई काम गर्छन् । अर्काको निन्दा कोही गर्दैन । मुष भारादारा, १०।१२ मीनिस्टर वरोवर छन् । यतिमा यकाले अघ्यांलो गर्‍यो भन्या १० मीनिस्टर निसाफ् गरि ठोकछन् । नञा काम केही पर्‍यो भन्या सबैको सल्हाले काम गर्छन् । मेल गरि काम हुंछ ।

. यक दिन । फ्रान्सीस् सहरदेषी २७ कोसमा फाटनुव्ल भन्या यक ठुलो जंगल छ । तेस जंगलका बीचमा एक सहर वन्याको छ । ताहा २ पल्टन् पैदल संतरी, १ पल्टन् रिसल्ला तुर्कि सवारको छाउनी वस्याको । ताहा यक दर्वार कस्तो वन्याको छ भन्या ७ करवर रुपैंआ लाग्को पर्तेना[2] भयाको तीन सय वर्षदेषि वडका वादसाहाको तसवीर उतारि राष्याको । वादसाही फौजको जगा–जगामा लडाई भयाको । त्यो लडाई हेर्न भनि आकासमा आपसंग–[illegible] विमानमा चढी हेर्न लाग्याका । नाना तह्रको तसवीर लेष्याका छन । पुजाकोठामा अल्हे वोलन भन्या जस्ता देवतालाई चढायाको भकाभकी वयान गरि नसकनु । पुजाका भाडा, गहना, पोसाक्, बीछयाउना तीन वर्षदेपी वढेका दुरुस्त छन । बैठकमा

१. (?) २. (?)

सुनैको काम, तसवीर, झाडवत्ति, ऐनाका फिलि झ्याल सुनैका छन । ताहाका मानीस् पनि, हिरा, मोती, मुगाले वादसाहाका टेबोलमा झुंडियाका छन् । त्यो बैठक्को झ्याल चारै तर्फ खोली हेर्दा दक्षिण दीसामा वडे तलाउ १ कोसको गोर्दा भयाको, चारै तर्फ पथरको सिढि लाग्याको अति नीर्मल् ठंडा पानी, माछा, राजहंस-ले युक्त भयाको छ । पुर्व दीसा वडे-वगैंचा जात-जातका फुल-वारि भरिपुर्ण भै फुलीरह्याको छ—पुर्व दीसामा रहेछ । जात-जातका फल पाकिरह्याको—दाष, अङ्गुर, नासपाति, स्याउ, अरु जात ढेरै थिया । रुपका तमास् चित्रबीचीत्र सडक्मा पानिका फोहरा छोड्याका वहुत सुन्दर वगैंचा वन्याको रहेछ । उत्तर दीसामा राम्रो सफा सहर, वडे वजारको वहाड् । पश्चिम दीसा वडे, पचासौनी हजार घोडाको तुरुक सवारका वरोबर कवायत हुन लाग्याको छ । सहरवासी मानीस् तमासा हेर्न पाजत भयाका छन् । ताहाका मानीस् वहुत राम्रा छन् । वहुत जाडो पनि नाही, गर्मी पनि नाही । वडो मुवीस्ता जगा रहेछ ।

तेस जगामा वुनेपाटले ५० लाष फौज जमाई मान टोपीका मुलुक मार्दै रुसमा गया र रुसिया वादसाहले वुनेपाटको फौज देषदा आत हारी आफ्ना सहरका फौज-दुनीया भगाई सहर षाली गरायान् । सहरमा आगो लगाइ भागदा सहर सबै जलेछ । तेसै बीचमा हिउ परेछ र वुनेपाटका लसकर वतमा वस्न नपाई हिउ वारिमा पर्याछन र ५० लाष फौजमा तीन लाष फौज वाकी रह्याछन् । तसै औसरमा नौ टोपीका वदसाहाको फौज पछि लाग्दा देवले मार्याको वषत्मा वुनेपाट् हटी आउदा नौ टोपीका

वादसाह फौज पछि लाग्याकै थिया । वुनेपाट् आफ्ना प्यारिस् सहरनेरा आइपुग्दा आफ्ना सहरवासी दूनीया सबै वुनेपाट्सीत गै चिंत्ति गर्‍या । क्या वींत्ति गर्‍या भन्या आज तीमीलाइ ५ दैवले पनि विपक्ष गरी तिम्रा वाँहा फौज-पल्टन मारीदीया र नौ टोपीका वादसाहा पछि लागी रह्याछन् । तीनले सहर उजार गर्न्याछन् ।★ तसर्थ फाटन्पुल भन्याको सहर जंगलभीत्र छ, वस्नालाई दर्वार पनि वढिया छ । ताहा जाइवस । अरू वेहोराको मदत् हामी दीउला भन्या र दूनीयाले मनासीव भन्या भनि षुसी भै फाटनवुल भन्याको जंगलको सहरमा गयाछन् र ताहा वस्या । तसै वीचमा नौ टोपीका वादसाहाले मतो गर्‍याछन् —यो मुलुक् कदाचीत हाम्रो हुन्या छैन् । क्या अर्थले भन्या आहाका मानीस् जमामर्दि छन् । अरू इनलाई दैवले पनि मार्‍यो । यक माथि ९ वादसाहा लाग्दा सहर[1] भयाको छ । नौ वादसाहाले मार्‍याको मुलुक यक वादसाहाले लिनु पनि हुदैन् । यक वादसाहा लाई दूनीआले राषन्या पनि छैनन ।★

तसर्थ वुनेटपाटले धपायाको यहि मुलुक्का वादसाहा लन्डन् वेलायेत्मा छन् । तीनैलाई गादीमा वसाउ । वुनेपाटलाई यल्बा[3] टापुमा राषी इनलाई षर्च मैन्हाको लाष रुपैआका हिसावले वर्ष १को १२ लाष रुपैआ दिनु भन्या वीन्ती गरि पुराना वादसाहा लाई थिति गरि ९ तोपीका वादसाहा वसि अव उप्रान्त आफ्ना-आफ्ना मुलुक्मा रहनु जुन वादसाहाले अघ्यालो गर्ला उसलाई आठ वादसाहा मीली मार्नु भनि धर्मपत्र अहदनामा गरि

१. ( ? )    २. सर ( जीत ) ?    ३. सेंण्टहेलेना ( ? )

★ ★ यति दोहोरिएको छ ।

फ्रान्सीसका पुराना वादसाहालाई गादीमा राषी । वुनेटपाट्ले पनि मेरा षुसिले गादी छोड्या भनि हस्ताक्षर लेषी यलाव् टापुमा गया । नौ टोपिका वादसाहाहरू धर्मपत्र लि आफ्ना मुलुक्मा गया । त्यो जगा हेर्न जांछौ की हेर्न लायक्को जगा छ । नौ वादसाहको धर्मपत्र भयाको जगा हो भनि परिसडन्टले नेपालका श्री प्राइम् मिनिष्टर साहेबलाई सोध्या र त्यो जगा हेर्नाको मलाई पनि इछ्या छ भनुभयो र परिसडन्टका भाई मीनिष्टर साथमा लाई रेलगाडामा सवार गराया र फाटन् वुलु भंन्याका सहर गया र त्यो जंगलभीत्रका सहरमा दर्वार, तलाउ, छाउनी, वगैचा, कील्ला, तुरुक स्वरको कवायेत् वुनेपाटले जग्गामर्दी गर्न्याको वताया । फरि वगिमा सवारि गराई सारा जंगल देषाया । अघिका वादसाहाका कृति येक्येक् गरि देषाया । वडो षातिर गर्न्या । २७ कोसका वाटो प्यारिस् सहरमा पुग्या । आउदा–जादा ५४ कोस् जमीन् १० घडिमा पुर्‍याइदिया । वतास्भन्दा पनि चाडो हुदो रहेछ ।

सारा मुलुक्मा वगैचा लायाको, मेवाको षेति दूनिञा वहुत गर्न्या । धान हुंदोरहेछ । गहुंछौ वाको षेती गर्दा रह्याछन् । प्यारिस् सहरभीत्र पसि–वोका केही जात पनि मार्नु माकुब रहेछ । सहर वाहीर भारि मासु ल्याउदा रह्याछन् । षानाको, षेति गर्नाको, वेपार गर्नाको, फौज–पल्टन्को अंन जो वाधीयाको छ सो थितिमा रह्याको छन् । हुलदंगा हुन पाउदैरण । दूनीया, फौज, भारादार, वादसाहाको थिति पारमेन्ट कचर्गरिवाट हुंछ । ती दूनीया, फौज वडा षुसिमा रह्याछन् । नाच–तमासा गर्छन् । तेस

मुलुक्मा दौलथदार मानीस् ढेरै रह्याछन् । प्यारिस सहर अरू बढदैछन् । बढा-बढा अकल्मन्द मानीस् छन् । सबै कुराको मौलेय गर्छन । बडा-बडा हीकमति काम गर्छन् । पृथीवीमा हीकमतलाई सबैका गुरु रह्याछन् । दर्वार पनि १०।१२ जगामा बन्याका छन् । फोज-पल्टन् पनि फोरी सर्वत्र जगामा राख्याका छन् ।

## भर्साई

प्यारिस् सहरदेषी ७ कोसमा वर्सिल भन्याको जगा रहेछ । ताहा फ्रान्सीसका वादसाहहरू १५ सय वर्षदेषी बढका वादसाहाले दर्वार वनाउन लाग्याको अभ्र बंदैछ । त्यो दर्वार कस्तो छ भन्या १ कोसको गीर्दा भयाको । चारैतर्फ बडा-बडा बगैंचा-तलाउ । ताहादेषी वाहीर चारैतर्फ वन पाल्याको मैदान जगा । बीचमा सानु सहर नेपालका पाटन सहर जत्रो । चारौतर्फ सडक् चौडाया-का छन । फुलवारि मेवाले पुर्ण भयाको मानु इंद्रासन जस्तो । ताहा एक छाउनी-कील्ला दुइ हजार सिपाहि वस्याका छन । मालीकमा यक कर्णेल भयाको मानु छ । तेस जगामा वादसाहाले नेपालका श्री प्राइम् मिनीष्टर साहेबलाई त्यो दर्वार देषाइल्याउ भनि आफ्ना भाइ साथ लाई पठाइदीया र रेलगाडामा सवारि भै ७ कोस यकै घडिमा पुग्या र ताहा बडा साहेब आइ बडो पातीर गर्‍या । दर्वारका ताला-कुंचि लि बैठक, चोटा, कोठा कौसी, अटाली, नाचघर, पुजाकोठा, ढुकुटो, भडार ज्यावद दवार । तेस्ता राम्रा दर्वार पृथीवीका पीथमरमा छैन भणी बडा-बडा मुसाफेर औलीयाले वयान् गरियाको छ । ज्यावद चोटा, कोठा, बैठक् सुनका मोलंवाले चित्रकार भरियाको छ । तसवीर, झाडवतिका

हीसाबै छैन् । तेस दरवार भरमा चोता कोठा गरि दुइ सये पचास् २५० रह्याछन् । ज्यावद कोठा–बैठक्मा अघीका बादसाहाले लडाइ गऱ्याको बडा–बडा भारथ तसवीर लेषीयाका छन् । बुनेपाट ले ७ टोपीका बादसाहा मारी आपना भाईलाई बादसाहा थाप्याको, आफुले रणभुमीमा गै जमामर्दि गऱ्याको, आफुले बाद-साही गऱ्या, बादसाहाकी छोरी आफुले बीवाहा गऱ्याको, पाच लाष फौज ली मुलुक्–मुलुकमा गै दिगवीजय गऱ्याको बीलकुल तसवीरमा फौज–पल्टन् सर्दारहरू गढि–कील्ला, मुलुक्–मुलुकका नक्स लेषीयाका माहाभारथ देषदा ताहाको बयान् गरिसक्नी न्दैन् ॥

यक दिन प्यारिसका बादसाहाले गोर्षाका श्री प्राइम मिनीष्टर साहेबलाई तपाजीको कोही भंनुको इछा छ भंनुहवस् भन्याछन् र लाष फौजको परेट हेर्छु भनि मर्जि भयो र फ्रान्सीसका बाद-साहाले नेपालका प्राइम् मीनीष्टर साहेबलाइ बर्स्या भंन्या छाउ-नीमा लाष फौजको परेट देषाउला भन्या र सबै भारादारहरूले बादसाहासित बीन्ती गऱ्यछन्—आहा रप‍ब्यालीन्[1] भन्याको जगा छ । लाष फौज जमा भया फौजले जो आटयो सो हुंछ । तसरथ लाष फौज जमा गर्न हुंदैन भनि प्राइम् मीनीष्टर कम्या-ण्डर–इन–चिफ् पारमैन्ट कौसलका भारादारहरूले बीन्ति गऱ्या छन् र लौ भन्याछन् । उसोभया ५० हजारको परेट् देषाया । सलामी गराया । कवायेद् देषाया । त्यो परेट् हेर्न भनि प्यारिस सहरका लाषौ बगीका सवार भै बडा–बडा साहेब, लेडी साहेब आयाका थिया । सले नेपालका श्री प्राइम मीनीष्टर साहेबलाई सलाम गऱ्या । ताहाका भारादार, कौसलिया, बुडा–पुरानाहरूका

1. रिपब्लिक ( ? )

आपसमा कुरा हुदा नेपालका श्री प्राइम् मीनीष्टर साहेव बडा उमेददार रह्याछन् । क्या अर्थले भन्या वेयनालाई मुव सुप पनि वंसको जारपार पनि, अकलवंद, दीलका सुरा, हिडदा-वसदा कुरा गर्दा चटाक् पनि । सब काम-कार्णाना मैले देषनू सक्नु जानु पर्दछ भन्या होसीयार । मनासीवमा धन षर्च गर्न गाह्रो नमान्या । सबैलाइ दिन्या हु कुनैसित लीन्या होइन भन्या सेषी पनि भयाका । इन्का सबै कारषानाको लक्षण देषदा र इनने वोल्याको बोल फुल्छ भनि सुदा हेराई, वोलाई, हीडाई, हसाईको लक्षण देषदा अघि हाम्रा वादसाहको स्वभाव इन्मा रहेछ, इ ता बडा आडमी हुन्याछन भनि कचहरिमा कुरा भयाछन् । श्री प्राइम् मीनीष्टर साहेबले यो सफर गर्दा जगा-जगाका बडा मानीसले वयान गर्दछन् ।

## पेरिसबाट—बम्बई

ताहा प्यारिस् सहरमा ४० दीन मुकाम् गरि वादसाहासीत बीदा भै रेलगाडामा सवार भै मार्स्या घाट्मा १० दीनमा पुग्नु-भयो र तेस् घाट्मा अंग्रेज वादसाहावाट् सवारीको जाहाज तयार गरि राष्याको रहेछ । तेसै जाहाजमा सवार भै अन्डरराह गरि बंबैतर्फ सवारि भयो । बीच समुद्रमा काहि-काही नाना पाहाड् देषीन्या । यक पाहाड गंधकका रहेछ । त्यो पाहाड जलन लाग्याको थियो । हीन्दुस्थानको नजीक् हुनाले चराहरू पनि देषीन लाग्या । माछाहरू जात-जातका देषिंछन् । मोतीका कीनाराहरू पनि देषीनलाग्या । केही रमाईलो भयो । विहान प्रहरमा बंबै उत्रन्या घाटमा सवरिको जहाज पुग्यो र ताहा तोपको सलामी

भयो । हीन्दुस्थान मानीस देखदा आफ्ना घरका परिवा सत भेटर भया जस्तो लाग्न्या । वडो षुसीनामा भयो । वंवेमा आठ दिन् मुकाम गरि श्री द्वारिकानाथको दर्सन गर्न फेरी धुवाकस जाहाजमा स्वार भै समुद्रको रस्ता पालनुभयो । ठाकुरको दर्सन भयो ॥ ताहाका ज्यावद पंनाहरूलाइ दक्षिणा दीनुभयो । ठाकुरीका पुरिमा नीते पुजालाई ४ हजार रुपैञा अडका राषीवक्सनु भयो । ताहा देषी तीन दीन् वंवैतर्फ फिर्नु भयो ।

## रामनाथ-दर्शन

फेरि रामनाथको दर्सन् गर्न जानाको मदत् अंग्रेज जहाजि कपतानसित गर्दा कलंवु टापुवाट् गया ७।८ दिनमा पुगिंछन, तर ताहा वडो भवरि छ । भवरि काट्न वडो कठीन छ भनि अंग्रेजले वीन्ती गर्दा श्री प्राइम् मिनिष्टर साहेववाट् मालुम भये म तेही भवरीको वाटो जाउ भनि मर्जीभयो र तेही भवरिको वाटो स्वारी भयो । भवरिमा पुग्दा वहा तोफान् पनि आयो । लहरीले जहाज चढाउ-उतार गर्दा त्यो जाहाजमा वस्न्या जहाजी अंग्रेज कपतान्, जाहाजी मुसाहेव अरू कसैको सिर ठाडो राषनाको तागत् रहेन । जाहाजी अंग्रेज कपतान् भन्या साह्रै हडवडाउन लाग्यो । आपस्मा हडवडाउन लाग्या । काजी डीह्लीसींह वस्न्यात् पनि साह्रै हडवडाया । श्री मीनिष्टर साहेव भन्या कति पनि हडवड् गर्नु भयेन् । वहाका प्रतापले लहरि काटी ३ दीनको वाट येक दीनमा कलंवु टापुमा पुगीयो । त्यो भवरि कस्तो रहेछ भन्या अघीका औलीया सीकंदर वादसाहाले तस वाटो लंका टापु जादा तेहि भवरिमा पऱ्याछन र पार तार्न नसकि फर्कनु परेछ र यक

नीसाना राष्याछन् । येक सीलोक नीसानामा लेषीराष्याको थीयो । कुन सीलोक भन्या जन–समुद्र हरी लहुनका दरियाना भुजा पही। सीकंदरकी मतिआ व ॥ १ ॥ भंन्या तक्मा सीकंदर वादसाहाले राषी फर्की आयाको समुद्र हो भंछन् ।, अव यो कुरो लाठ साहेव सीत जाहेर गर्नु पर्छ । जाहेर नगऱ्या मेराउपर वडो षपगि हुन्या-छन् भनि जाहाजी कप्तान् साहु दरायाको थीयो ।

जसै सुर्य्य उदय भया कलंवु तापुमा पुगीयो र ताहा गोरा पल्टन्, काला पल्टन्, लाठ साहेव, वडो सहर छाउनी गरि वस्याका छन् । ताहा लाठ साहेवसीत भेट मुलाकात भयो । तोपको सलामी दिया । लैनको सलामी भयो । वाटाको पैराफीयत् पुछ्या । सव विस्तार गरिवक्सनुभयो । वडो षातीर गऱ्या । ताहापछि जाहाजी कप्तान्ले समुद्रको भवरीको कुरा जाहेर गऱ्या र लाठ साहेव रिसाया । क्यानभन्या नेपालका श्री प्राइम् मीनीष्टरलाइ समुद्रको रस्ताको मालुम् थियेन । तैले त्यो वाटोको षवर कहीस र वडा मानीसले अनौठो कुरो सुन्यापछि उहीं कुराको सौष हुंछ । तैले वेमुनासीवको रस्ता लगीस् । केही वोत वल पऱ्याको भया गोर्षा महाराजसित दोस्तमा षलवल पर्न्या थियो । हामीलाई अपजस् पनि पर्न्याथीयो भनि अपसोच गरि रीसाया । फेरि अर्को जहाज षटाया । समुद्रको कीनाराको वाटो गरि रामनाथको दर्सन् गराई ल्याउ भनि षटाया । वडा सुवीस्तासात रामनाथ पुऱ्याई दीया । ताहा हेरा असल हवेली ज्याफत तयार गरी राख्याको रहेछ । थोर वेर वीश्राम गरि दर्सन गर्न पाउ लाग्नु भयो । इश्वरको दर्सन् गर्नु भयो । भारी पुजा गरिवक्सनु भयो । सवै पंडाहरू लाई दक्षिणा वक्सनुभयो । सव पंडाहरू षुसिभया । नीत्य पुजालाइ ४१५ हजर रुपैञा अडका राषीवक्सनुभयो ।

ताहाका ज्यावद तिर्थमा स्नान गरि पीन्ड दान गरिबक्सनुभयो। ताहा यक दीन् मुकाम गरि बगीका डाकमा स वारी भयो।

## बनारसमा विवाह

ताहादेषी १२ दीनमा कलकता पुग्नुभयो । ताहाबाट् लाट साहेबसीत भेट--मुलाकात गरि ताहा १० दीन मुकाम् गरि चाहीन्या चीज–वस्तु अर्दी घोडा दसत्रार परिद गरि मीजानाका डाकमा बनारस सहरतर्फ श्री मीनीष्टर साहेबको सवारी भयो। बनारस सहरमा कुटुक महाराजकी मैञा बीबाह् गरि श्री प्राइम् मीनीष्टर साहेबको सबारी नेपालतर्फ भयो॥ ॥ ॥



